# नेपालमा सामुदायिक रेडियो



**पुष्प अधिकारी**

सामुदायिक रेडियो सहयोग केन्द्र
नेपाल वातावरण पत्रकार समूह
थापाथली, काठमाडौं

# नेपालमा सामुदायिक रेडियो

*लेखक*
पुष्प अधिकारी

*डिजाइन*
रविन साय्मी

*कम्प्युटर*
बेबिना श्रेष्ठ

*पहिलो संस्करण*
२०५९

*छापिएको प्रति*
१०००

*मुद्रक*
द प्रेस अनलिमिटेड (प्रा) लि, सामाखुसी, फोन: ३५६३९५

*प्रकाशक*
कम्युनिकेसन असिस्टेन्स् फाउन्डेसन (CAF, Netherland) को सहयोगमा
सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूह
थापाथली, काठमाडौं

मूल्य रु ७५

# लेखकीय

नेपालमा सामुदायिक वा समुदायमुखी प्रसारण माध्यमको सुरुवात भएको झन्डै ६ वर्ष बितिसकेको छ । यस अवधिमा सामुदायिक रेडियोहरूलगायत अन्य फ्रिक्वेन्सी मोडुलेसन (एफएम) रेडियोहरूले प्रसारणको इजाजत पाएका छन् । नेपालजस्तो मुलुकमा सञ्चारको यस्तो खुलापन आउनुलाई विकासका लागि स्वागतयोग्य अवसर मान्नुपर्दछ । सामुदायिक जनमुखी सञ्चारको विकास गर्ने नाम दिएर वा यो नामलाई बेचेर कैयन व्यक्ति, संस्था वा गैरपत्रकारका झुण्डले आफ्नो स्वार्थसिद्धि गरेका छन् र अझै पनि गरिरहेका छन् । यस्तो अवस्थामा सामुदायिक रेडियो के हो ? यसको उद्देश्य कस्तो हुनुपर्दछ । यसलाई समाजको हितमा समाजले नै कसरी उपयोग गर्न सक्दछ भन्ने सामान्य सैद्धान्तिक तथा व्यावहारिक ज्ञान पाठकले प्राप्त गर्न सकुन् साथै नयाँ तथा पुराना प्रसारकहरूलाई सामुदायिक रेडियोलाई समाजमुखी बनाउन यस पुस्तकले सहयोग गर्न सक्ला कि भन्ने आशा लिएको छु ।

नेपाल पिछडिएको छ, विकासका मामिलामा । तर पिछडिएको छ भन्दैमा पिछडिएको समाजको नाम बेचेर आफ्नो स्वार्थसिद्ध गर्ने तर त्यस समाजसँग कुनै सरोकार नराख्ने "भिरु" अगुवा पत्रकारहरूबाट सामुदायिक भावनालाई कुल्चन बेलाबखत हुने गरेका प्रयासहरूबाट प्रसारकहरू बेलैमा सचेत होउन् भन्ने उद्देश्यसमेत यस पुस्तकले समेटेको छ ।

सामुदायिक रेडियो प्रसारणका क्षेत्रमा यो पुस्तकले केही योगदान दिन सके आफ्नो मेहनत फलिभूत भएको महसुस गर्नेछु । यो पुस्तक तयार पार्ने मौका प्रदान गर्ने सामुदायिक रेडियो सहयोग केन्द्र (नेवापस) प्रति आभारी छु । सामुदायिक रेडियो सहयोग केन्द्रका संयोजक रघु मैनाली, मित्र मोहन विष्ट, मेरा अग्रज तथा गुरु पी. खरेल, जसले मलाई अंग्रेजी भाषामा पत्रकारिताका लागि प्रेरणा दिनुभयो, सँग अनुग्रहित

छु। भाषाको पक्ष हेरिदिनु हुने मित्र जीवनाथ खनाल,कम्प्युटर लेआउ/टाइप गरिदिने बेबिना श्रेष्ठप्रति आभारी छु। समुदाय भन्नासाथ सामाजिक, आर्थिक, राजनीतिक, भाषिक, सांस्कृतिकलगायतका दर्जनौं विषयहरूको योगफल जस्तै हुन आउँछ। सबै पक्षलाई एक–एक गरी पुस्तकले समेट्न सकेको छैन। तर पनि सामान्यतया आवश्यक पर्ने र नसमेटी नहुने विषयलाई भने प्राथमिकतामा राखिएको छ। यो आरम्भ हो– यसले गति लिने परिवेश मिल्यो भने विस्तृत रुपमा अझ थप अनुसन्धान गरी अन्य मित्रहरूले पनि यसमा योगदान गर्नु हुने नै छ भन्ने पूर्ण विश्वास लिएको छु।

*पुष्प अधिकारी*

# विषय सूची

आजको विश्वमा सञ्चारमाध्यमको रुपमा प्रयुक्त रेडियो तरङ्गको महत्त्व खेतीपातीका लागि भूमि र माछाका लागि पानीको जत्तिकै छ । यसबाट वा यसमार्फत समाजमा ठूलो परिवर्तन ल्याउन सकिन्छ । रेडियो तरङ्ग पनि एक प्रकारको प्राकृतिक सम्पदा नै हो तर समाजशास्त्रीहरूले यसको महत्त्व र सामाजिक पाटाहरूलाई ओझेलमै राख्ने गरेका छन् । भौतिक रुपमा देखिन नसकिने भएकाले पनि समाजशास्त्रीहरू यसलाई प्राकृतिक सम्पदाको रुपमा स्वीकार्न हिच्किचाएका हुन सक्छन् । रेडियो तरङ्ग अन्य प्राकृतिक सम्पदाभन्दा निम्न कुरामा भिन्न छ ।

(क) रेडियो तरङ्ग सूचना आदान-प्रदानका लागि मात्र प्रयोग हुन्छ । यसका लागि ट्रान्समिटर र रिसिभर अपरिहार्य साधन हुन् । पहिलोले ध्वनि तरङ्गको रुपमा सूचना सामग्री फ्याँक्ने काम गर्छ भने दोस्रोले त्यसलाई ग्रहण गरेर श्रोतासम्म पुऱ्याउने काम गर्छ । यो विशेषता अन्य प्राकृतिक सम्पदामा पाइँदैन ।

(ख) रेडियो तरङ्गको सीमा हुँदैन । कुनै क्षेत्र विशेष वा मुलुक विशेषले मात्रै रेडियो तरङ्ग आफ्नो नियन्त्रणमा राख्न सक्दैन । तथापि राष्ट्रिय तथा अन्तर्राष्ट्रिय रुपमा तोकिएका नियम-कानुनको परिधि नाघ्न भने पाइँदैन । उदाहरणका लागि दोस्रो विश्वयुद्धताका युद्धमा संलग्न वा असंलग्न राष्ट्रहरूले अन्तर्राष्ट्रिय दूरसञ्चार संगठनले निर्धारण गरेका रेडियो तरंगसम्बन्धी मापदण्ड तथा नीति-नियमको पालना गरे । संगठनले सबै राष्ट्रलाई एकअर्काको हस्तक्षेपरहित रेडियो तरङ्गको प्रयोग सुनिश्चित प्राय: गरेको थियो । यस अर्थमा पनि सबैले रेडियो तरङ्ग अथवा वर्णपटको (जसलाई अंग्रेजीमा स्पेक्ट्रम भनिन्छ) प्रयोग गर्ने हो भने विश्वव्यापी सहयोगको दरकार पर्दछ । तर २१ औं शताब्दीको आरम्भदेखि नै शक्ति सम्पन्न राष्ट्रहरूले सञ्चारमा आफ्नो मनोमानी र एकाधिकारलाई बढावा दिँदै गएकाले सञ्चार क्षेत्रमा यो प्रवृत्तिको असर पर्दै जान थालेको छ । अमेरिकाले खाडी क्षेत्रमा गरेको आक्रमण तथा रुसले चेचेन्यामा

गरेको सैनिक कारबाहीका बारेमा प्रेषित सञ्चार सामग्रीले नै सञ्चारमाध्यममा शक्ति राष्ट्रको 'एकाधिकार' प्रमाणित गर्दछ । यी दुवैबाट संकट प्रभावित भएका मुलुक वा क्षेत्रका आवाजहरू रेडियोमार्फत जुन रुप र मात्रामा आउनुपर्ने थियो ती आउन सकेनन् ।

(ग) रेडियो स्पेक्ट्रमको क्षय हुँदैन । प्रयोगकर्ताहरूमाझ रेडियो तरङ्गमा हस्तक्षेप गरागर नभएसम्म यो सुचारु हुन्छ । हस्तक्षेप भएको अवस्थामा यो अवरुद्ध हुन्छ, तर हस्तक्षेप रोकिनासाथ रेडियो तरङ्ग आफ्नो पूर्वरुपमै फर्कन्छ । अन्तर्राष्ट्रिय मान्यता तथा नियम-कानुनले यस्ता सम्भावित हस्तक्षेपहरूलाई न्यून गरेका भने हुन्छन् । तर अन्य प्राकृतिक वस्तु जस्तो ढुंगा, माटो आदिको स्वरुप एकपटक क्षय भइसकेपछि तिनलाई पूर्व अवस्थामा नै फर्कन सैकडौं वा हजारौं वर्ष लाग्न सक्छ ।

(घ) रेडियो वर्णपटको प्रयोगको अधिकारलाई ठोस रुपमा परिभाषित गर्न सकिँदैन । किनकि यो कसैको पूर्ण नियन्त्रणमा हुन वा रहन सक्दैन । अथवा यसमाथि नियन्त्रण गर्न खोज्नु भनेको हुटिट्याउँले आकाश थाम्छु भनेर आकाशतिर खुट्टा फर्काएर बस्नु जस्तै हो ।

(ङ) सूचनाको आदान-प्रदानमा राजनीतिक शक्तिले नियन्त्रण गर्ने हुनाले रेडियो वर्णपटमाथिको नियन्त्रण वा हस्तक्षेपको प्रयास कुनै पनि मुलुकको सार्वभौमिकतामाथिको हस्तक्षेपसरह नै हुन्छ । प्राकृतिक विपत्ति होस् वा मानव सिर्जित संकट सबैखाले घटनामा रेडियोले खेल्ने भूमिकाको प्रभावकारिता र महत्त्वलाई सबैले नतस्तक भएर स्वीकार गरेकै छन् ।

यिनै विशेषताका कारण रेडियो वर्णपट विश्वकै साझा सम्पत्ति हुन गएको छ भने आंशिक रुपमा हरेक राष्ट्रले यसलाई राष्ट्रिय सम्पत्तिका रुपमा पनि लिने गरेका छन् ।

## रेडियो फ्रिक्वेन्सी विभाजन

रेडियो वर्णपटमा चुम्बकीय विद्युत् शक्तिलाई विभिन्न दूरीमा तरङ्गित गरी प्रसार गर्न सक्ने चुम्बकीय तथा विद्युतीय क्षेत्र हुन्छन् । जब यी चुम्बकीय विद्युत् तरङ्गलाई सक्रिय बनाएर तिनमा सूचना भरिन्छ, तब त्यो सूचना एउटा निश्चित दूरीसम्म वा सीमित क्षेत्रमा 'डिकोड' गरेर ग्रहण गर्न सकिन्छ । यस्ता चुम्बकीय विद्युत् तरङ्गको पहुँचलाई भू-बनोट तथा ध्वनि प्रदूषण आदिले सीमित बनाउन सक्छन् । सामान्यतया भूमिगत पानीमा रेडियो तरङ्ग भूमिमा भन्दा पानीमा बढी टाढासम्म पुग्न सक्छ । यसैगरी पहाडी इलाकामा भन्दा मैदानी क्षेत्रमा रेडियो तरङ्गको पहुँच टाढासम्म हुन्छ । यसबाहेक ट्रान्समिटरको एन्टेना तथा रिसिभरको एन्टेनाको शक्तिमा पनि रेडियो तरङ्ग प्याक्ने र ग्रहण गर्ने क्षमता निर्भर रहन्छ । सामान्य अर्थमा रेडियो स्पेक्ट्रमको व्यवस्थापनमा तीनवटा निर्धारक चरण हुन्छन् :

(क) रेडियो स्पेक्ट्रम वा वर्णपटको व्यवस्थापनको पहिलो चरण हो, प्रसारकको उद्देश्य सामग्री आदिको प्रकृति हेरी प्रसारणका लागि प्रयोग गर्न दिइने व्यान्डको निर्धारण गर्नु । उदाहरणका लागि वायुसेवा कम्पनीले विमान सञ्चालन गर्दा प्रयोग गर्ने फ्रिक्वेन्सीलाई लिन सकिन्छ । विमानहरूका लागि बाटो पत्ता लगाउन परेमा वा समुद्रमाथि उडेका विमानहरूले लामो दूरीमा सम्पर्क स्थापना गर्न सकिने बेग्लै फ्रिक्वेन्सी प्रयोग गर्छन् भने धावनमार्गमा अवतरण गर्ने बेलामा र हवाईमार्ग र जमिनबीच सम्पर्क गर्दा छोटो दूरीको फ्रिक्वेन्सी प्रयोग गर्छन् । त्यसकारण प्रयोगको सरलता र आवश्यकतालाई ध्यानमा राखेर फ्रिक्वेन्सी निर्धारण गर्नु जरुरी हुन्छ ।

(ख) रेडियो वर्णपटको व्यवस्थापनको दोस्रो चरण हो- सूचना प्रवाह गर्न प्रयोग गरिने ट्रान्समिटर राखेको ठाउँ, ग्रहण गर्ने स्थान रहेका ठाउँ, त्यहाँको वातावरण रेडियो फ्रिक्वेन्सीका लागि उपयुक्त भए/नभएको प्राविधिक निर्क्यौल गरेरमात्र फ्रिक्वेन्सी व्यान्डको इजाजत दिन सकिन्छ ।

(ग) रेडियो स्पेक्ट्रमको व्यवस्थापनको तेस्रो महत्त्वपूर्ण चरण हो, फ्रिक्वेन्सी प्रयोगकर्ताको पहिचान । कसले र कुन प्रयोजनका लागि कुन फ्रिक्वेन्सी प्रयोग गर्न चाहेको हो त्यसको किटान नगरी फ्रिक्वेन्सी तथा व्यान्डको इजाजत दिँदा त्यसको प्रयोग गलत व्यक्ति वा समूहले गलत प्रयोजनका लागि गर्न सक्ने खतरा हुन्छ ।

तर यो तेस्रो चरणको निर्धारकलाई विकासोन्मुख देशका सरकारले गलत रुपमा व्याख्या गरी जनताको सूचनाको अधिकारलाई सीमित पार्न खोजेका प्रशस्त उदाहरण पाइन्छ । विकासोन्मुख मुलुकहरूको सरकारले सूचना प्रसारणमा एकाधिकार कायम गर्न चाहनु यसको मुख्य कारण हो । जनताको सुसूचित हुने अधिकारका लागि निश्चित दूरीमा स्थापना गर्न खोजिएका रेडियो स्टेसनहरूलाई इजाजत प्रदान गर्ने काममा सरलता नल्याई सरकारी तहबाट धरपकड गर्ने, अनावश्यक कर थोपर्ने आदि कार्य हुँदा जनताको मानवअधिकार कुण्ठित हुन जाने निश्चित नै छ । उदाहरणका लागि नेपाललाई लिन सकिन्छ । सामाजिक परिवर्तन र जनताको सुसूचित हुने अधिकार संरक्षणका लागि खुल्ने सामुदायिक रेडियोलाई सकेसम्म निरुत्साहित गर्ने एवं व्यापारिक र सामुदायिक रेडियोबीच भिन्नता नगर्ने नीतिहरूले नेपालको नीति-निर्माण तहमा बस्नेहरूको नियतमा शंका गर्ने ठाउँ प्रशस्त छन् ।

रेडियो वर्णपटको व्यवस्थापनमा तीनवटा मुख्य निर्धारक चरणहरू भए तापनि वर्णपटको विभाजनमा चाहिँ बहुआयामिक विरोधाभाषहरू छन् । यसमध्येको प्रमुख विरोधाभाष हो, फ्रिक्वेन्सी प्रयोग गर्ने मुलुकको अवस्था । औद्योगिक राष्ट्रले गैरऔद्योगिक राष्ट्रमाथि फ्रिक्वेन्सी वितरणको चरणमा नै प्रभावित गरिरहेका हुन्छन् । हुनत विकासोन्मुख राष्ट्रको जनसंख्याको तुलनामा औद्योगिक राष्ट्रको जनसंख्या निकै कम हुन्छ । तर पनि आर्थिक सम्पन्नताले औद्योगिक राष्ट्रलाई हरक्षेत्रमा विकान्सोमुख राष्ट्रमाथि थिचोमिचो गर्ने अप्रत्यक्ष प्रोत्साहन पुगिरहेका हुन्छन् ।

यस्तो भए तापनि जनसंख्या, प्राकृतिक सम्पदा, सांस्कृतिक विशेषता र भौतिक उन्नतिको लक्ष्य आदिले विकसित वा औद्योगिक राष्ट्र र

विकासोन्मुख राष्ट्रलाई सहमतिका केही विन्दुहरूमा पुऱ्याउँदै आएको छ । जसमध्ये केही निम्नलिखित छन्:

(क) उपनिवेशिक शासनको अन्त्यपछि- उपनिवेशवादी राष्ट्र जसले पहिला आफ्नो अधिनमा रहेका नवस्वतन्त्र राष्ट्रहरूसँग उनीहरूको विविध पक्षमा नाता तोड्न सकेनन् । ती नवस्वतन्त्र राष्ट्रहरूसँग गाँसिएको उनीहरूको व्यापारिक वा अन्य स्वार्थ जारी नै रह्यो । यसैगरी नवस्वतन्त्र राष्ट्रहरूले पनि औद्योगिक राष्ट्रहरूसँग आर्थिक सम्बन्ध कायम गर्नै पर्ने भयो । खाद्यान्न उत्पादन तथा अन्य स्रोतमा सम्पन्न नवस्वतन्त्र राष्ट्रहरूको बजार औद्योगिक तथा विकसित राष्ट्र नै भएकाले दुवै पक्ष आ-आफ्नो उन्नतिका लागि एक-अर्कामा निर्भर हुन पर्ने भयो ।

(ख) राष्ट्र र जनताको विकास तथा प्रगतिका लागि वैज्ञानिक प्रविधि, ज्ञान, सीप, पुँजीलगायतका कुरामा नवस्वतन्त्र राष्ट्रहरूले विकसित राष्ट्रहरूमा निर्भर रहनुपर्ने भएकाले विकसित राष्ट्रसँगको आफ्नो नाता तोड्न सकेनन् । यद्यपि यस्ता कुरामा सहयोग लिँदा सकेसम्म कम आश्रित हुनुपर्ने अवस्था सिर्जना गर्नेतर्फ भने विकासोन्मुख मुलुक सचेत रहे ।

(ग) कुनै पनि मुलुक स्वतन्त्र राष्ट्रको रुपमा रहन र विकसित हुनका लागि उसको आफ्नै सञ्चार प्रणाली हुनुपर्छ । जुन सो मुलुकको नै स्वामित्व, नियन्त्रण र सञ्चालनमा रहोस् । आफ्नै सञ्चार प्रणाली हुनुको अर्थ देशको आफ्नै सेना रहनुसरह हो । विदेशी नियन्त्रण अथवा विदेशीको हस्तक्षेपमा सञ्चारमाध्यम सञ्चालन हुने हो भने त्यसले कुनै पनि बेला मुलुकमा संकट निम्त्याउन सक्दछ । विकासोन्मुख राष्ट्रहरूले अति आवश्यक सेवाहरूमा विदेशी लगानी निम्त्याउने हो भने बजार अर्थतन्त्र वा खुला बजार नीतिको नारा दिएर नियन्त्रणमा लिन चाहने विकसित राष्ट्रहरूबाट विकासोन्मुख राष्ट्रहरूको राष्ट्रिय स्वाभिमान वा सार्वभौमिकतामाथि हुन सक्ने हस्तक्षेप रोक्न ठूलै कसरत गर्नुपर्छ ।

वायुमण्डलमा हुने रेडियो तरंगहरूको माध्यमबाट बिनातार रेडियो सेटहरूमा संकेत पठाउने वा प्राप्त गर्न सकिने प्रविधिलाई आधुनिक रेडियोको पुर्खा मान्न सकिन्छ । बिनातार रेडियो तरंग पठाउन सकिने यो प्रविधि पत्ता लगाउने श्रेय इटालीका वैज्ञानिक मार्कोनीलाई जान्छ । मार्कोनीले सन् १८९५ मा पत्ता लगाएको यो प्रविधि प्रथम विश्वयुद्ध (सन् १९१४-१८) मा व्यापक प्रयोग भयो । युद्धका निम्ति आवश्यक पर्ने संकेत तथा सूचनाहरू प्रसारण गर्न जनशक्ति पनि विकास गरियो । सन् १९१८ मा प्रथम विश्वयुद्धको अन्त्य भएपछि आ-आफ्ना घर फर्केका युद्धका सहभागी सैनिक तथा प्राविधिकहरूलाई आफू लडेको वा युद्धमा संलग्न भएका ठाउँका खबर तथा युद्धले परेका असरका खबर सुन्न पाउने उत्सुकता जाग्यो, जुन स्वाभाविक पनि थियो । मानसिक रुपमा युद्धबाट थाकेको अवस्थामा उनीहरू पुनः युद्ध हुन नदिनका लागि जनमानसमा चेतना जगाउने काम पनि गर्न चाहन्थे । अखबारको प्रचलन सुरु भइसकेकै थियो । त्यसैले सूचनाको असर वा प्रभावबाट जनमानस कत्तिको लाभान्वित हुन्छ भनी देखिसकिएकै थियो, तर आवश्यकता थियो बिनातार सूचना प्रसारणको । यस काममा युद्धमा रेडियो तरंगमार्फत सूचना प्रसारण गर्ने जनशक्तिले ठूलो काम गऱ्यो ।

युद्धपश्चात् विभिन्न मुलुकमा युद्धमा सञ्चार प्राविधिकको काम गर्ने जनशक्तिको समूहहरू स्थापना गरी काम सुरु हुन थाल्यो । सरकारमाथि प्रसारण सेवा सुरु गर्न दबाव दिने सञ्चार प्राविधिकको यो समूहलाई विद्युतीय सामग्री उत्पादन गर्ने कम्पनीहरूले उक्साइरहेका थिए । किनकि प्रसारण सेवा सुरु भएमा एकातिर उनीहरूको व्यापार फस्टाउने थियो भने अर्कोतिर उनीहरू उपलब्ध प्रविधिलाई युद्धमा मात्र नभई शान्तिको बेलामा वा शान्ति प्रवर्द्धनमा उपयोग गर्न पनि चाहन्थे ।

सन् १९१६ मै बिनातार सूचना तथा संगीत प्रसारण गर्न सकिन्छ भनेर अमेरिकाको पिट्सवर्गस्थित एउटा कम्पनीका इन्जिनियरहरूले प्रमाणित गरिसकेका थिए । उनीहरूले प्रयोगको रुपमा बिनातारको उपकरणबाट संगीत प्रसारण गरेका प्रसंगहरू थुप्रै थिए । त्यसबेला रेडियो सेटहरू

उपलब्ध भइनसकेका कारण श्रोताहरू घरेलु विद्युतीय उपकरणहरूमा ती संगीत सुन्ने गर्थे ।

यो पृष्ठभूमिमा सन् १९२० मा अमेरिकामा पहिलोपल्ट नियमित रेडियो प्रसारण सुरुवात् भयो ।

रेडियो स्टेसनका टान्समिटरबाट प्रसारित तरंग रेडियो सेटबाट ध्वनिमा परिणत भएर श्रोतासम्म पुग्ने हुनाले यो प्रविधि सरल बन्दै गयो । त्यसैले अमेरिकी सरकारले सामान्य प्रक्रिया पूरा गरेपछि तत्कालै प्रसारणको अनुमतिपत्र दिने पनि गर्न थाल्यो । फलस्वरुप निजी क्षेत्रमा त्यसको विकास र विस्तार यतिसम्म हुन पुग्यो कि हाल प्रत्येक १०-१२ हजार जनसंख्याका लागि एउटा रेडियो स्टेसन स्थापना भएको अनुमान गरिएको छ ।

तर विश्वका कतिपय विकसित तथा विकासोन्मुख मुलुकमा रेडियो प्रसारणमाथिको सरकारी नियन्त्रणका विषयमा गरमागरम बहस हुने गरेका छन् । रेडियो प्रसारणमाथि पूर्णसरकारी नियन्त्रण राखिनुपर्छ ? अथवा यसलाई पेसागत रेडियोकर्मीका जिम्मामा छोडिनुपर्छ वा यसलाई समाचारपत्रहरू जस्तै गरेर कुनै एउटा व्यापारिक प्रतिष्ठान वा धनाढ्यहरूको रुचि वा नाफाका लागि प्रयोग गर्न दिइनुपर्छ ? भन्ने विषयमा लामो समयदेखि चलिरहेको बहस निष्कर्षमा पुग्न अझै कति समय लाग्ने हो, निश्चित छैन ।

२० औं शताब्दीमा आक्षर सम्पन्न राष्ट्रहरूमा रेडियो प्रसारणको प्रविधिको विकास र विस्तार भएको हो र तिनै सम्पन्न राष्ट्रले यसमा नयाँ प्रयोग तथा अनुसन्धान पनि गर्दै यसलाई आजको २१ औं शताब्दीमा एउटा सशक्त माध्यमको रुपममा विकास गरे ।

फलस्वरुप विकसित राष्ट्रहरूले सञ्चार क्षेत्रमा एकाधिपत्य नै कायम गरेको मान्न सकिन्छ । प्रविधिको उपलब्धताअनुसार त्यसको उपयोग कुनै मुलुकमा वा समाजमा कसरी गर्ने भन्ने निश्चित गर्नु त्यसै मुलुक वा समाजमा निर्भर गर्ने गर्दछ ।

आधारभूत भौतिक सुविधा, शिक्षा, स्वास्थ्य सबै नै दयनीय अवस्थामा

रहेको नेपाल जस्तो विकासोन्मुख राष्ट्रका जनतामा सम्पूर्ण सूचना तथा शिक्षा पुऱ्याउने कुरामा रेडियोले नै अग्रणी भूमिका खेल्न सक्छ । किनकि रेडियो प्रदत्त सूचना उपभोग गर्न न त सात पहाड नाघेर शहर पस्नुपर्छ, न लेख-पढ् भएको हुनुपर्छ ।

हुनत सञ्चारका अन्य माध्यम जस्तै टेलिभिजन तथा पत्रपत्रिकाको प्रभाव पनि व्यापक बन्दै गएको छ । तर विकासका पूर्वाधारहरू शहरमा मात्र केन्द्रित नेपाल जस्तो पहाडी विकटताले भरिएको मुलुकमा रेडियो नै यस्तो माध्यम हुनसक्छ जसले विकासका लागि जनमानसमा उत्प्रेरणा जगाउने अहम् भूमिका खेल्छ ।

सामान्यतया स्वामित्व र उद्देश्यको दृष्टिले रेडियोलाई तीन वर्गमा बाँड्न सकिन्छ:

क. सरकारी वा सार्वजनिक रेडियो,

ख. व्यापारिक प्रयोजनको रेडियो,

ग. समूहको प्रधानता रहेको सामुदायिक रेडियो ।

## सरकारी वा सार्वजनिक रेडियो

सरकारले अथवा सरकारी संस्थाले प्रसारणलाई देशव्यापी बनाउने उद्देश्य राखेर आमनागरिकको बृहत्तर हित तथा जात, जाति, सम्प्रदाय इत्यादिबीचको भेदभाव अन्त्य गरी राष्ट्रलाई एकसूत्रमा गाँस्ने अभिप्रायले सञ्चालन गरेको रेडियो सार्वजनिक रेडियो हो । सैद्धान्तिक रुपमा जति व्याख्या गरे पनि सार्वजनिक रेडियोका उद्देश्यहरू क्रमश: विवादित बन्दै गइरहेका छन् । सरकारले सार्वजनिक रेडियोलाई कुनै एक दलको अभिष्ट साध्य गर्ने साधनको रुपमा प्रयोग गर्ने अभ्यास बढाउँदै लग्ने प्रयास गर्नुले पनि सार्वजनिक रेडियोका विकल्पको खोजी हुने गरेको छ । नेपालको परिप्रेक्ष्यमा रेडियो नेपाल तथा भारतको परिप्रेक्ष्यमा अल इन्डिया रेडियो साथै दक्षिण एसिया क्षेत्रका सरकारी रेडियोहरू यस कोटिमा पर्दछन् ।

## निजी अथवा व्यापारिक प्रयोजनको रेडियो

कुनै व्यक्ति वा निजी संस्था अथवा व्यापारिक प्रतिष्ठानले आफ्नो व्यापारिक प्रयोजनका लागि वा नाफा कमाउने उद्देश्यले कुनै क्षेत्र विशेषमा वा देशव्यापी रुपमा सञ्चालन गर्ने रेडियो व्यापारिक रेडियो हुन् । यस्ता रेडियोले प्रसारण गर्ने सामग्रीहरू पूर्णरुपमा विज्ञापनमुखी हुन्छन् अथवा व्यापारमुखी हुन्छन् । यस्ता प्रसारणहरूको देशव्यापी पहुँचका लागि पनि प्राय: सरकारले अनुमति दिएको हुँदैन । किनकि यिनले राष्ट्रिय सोच तथा साधनको परिचालन व्यापारिक उद्देश्यमै सीमित गर्न चाहेका हुन्छन् । नेपालको परिप्रेक्ष्यमा कान्तिपुर एफ.एम., केएटीएच, विराटनगरको कोशी एफ.एम. आदि यसका उदाहरण हुन् ।

## समूह प्रधान वा सामुदायिक रेडियो

सार्वजनिक हितको उच्च आकांक्षा लिएर समुदाय विशेष संगठित समूह, निकाय वा संस्थाको माध्यमबाट गैरनाफामूलक उद्देश्य लिएर सञ्चालन गरिने रेडियो सामुदायिक रेडियो हो । उद्देश्यगत रुपमा भन्ने हो भने सार्वजनिक रेडियो र सामुदायिक रेडियोबीच त्यति अन्तर छैन । सार्वजनिक रेडियोको लक्ष्य भनेको देशभरिका नागरिकको हित सम्बर्द्धन गर्नु, चेतनशील र सुसूचित गर्नु हो । त्यसैगरी सामुदायिक रेडियोले पनि आफ्नो लक्षित समुदाय विशेषलाई शिक्षित, सूचित गर्ने र मनोरञ्जन दिने लक्ष्य बनाएको हुन्छ । ताकि लक्षित समुदाय राष्ट्रियता सम्बर्द्धन र राष्ट्र निर्माणको मूलधारमा सशक्त रुपमा सहभागी हुन सक्षम बनोस् । सामुदायिक रेडियो व्यापारिक रेडियोभन्दा आधारभूत रुपमै फरक हुनुपर्दछ । किनकि यसको उद्देश्य जनकल्याण हो, नाफा कमाउनु होइन । तर नेपालमा सार्वजनिक, व्यापारिक र सामुदायिक रेडियोमा श्रोताहरूले त्यति अन्तर पहिल्याउन सक्ने स्थिति रहेको छैन । किनकि सबै रेडियोबाट उस्तै कार्यक्रम प्रसारण हुन्छन्, भइआएका छन् र सबैजसो रेडियो “सेवा” कै लागि भन्ने तर्क अघि सारेर स्थापना भएका छन् । नेपालमा खुलेका

रेडियोमध्ये रेडियो सगरमाथा चरित्र र व्यवहारका दृष्टिले नेपालको पहिलो सामुदायिक रेडियो हो ।

## रेडियो प्रसारणको प्रविधि

२१ औं शताब्दीको आरम्भ सँगसँगै प्रसारण प्रविधिमा ठूलै क्रान्ति आइसकेको छ । कार्यक्रम उत्पादन तथा प्रसारण एनालग प्रणालीबाट डिजिटल प्रणालीमा जाने क्रम बढ्दै गएको छ । यसले सम्पूर्ण प्रसारणको रुपलाई परिवर्तन गर्दै गएको छ । डिजिटल प्रणालीले प्रसारणको पुरानो प्रणाली एम्प्लिच्युट मोडुलेसन (ए.एम.) (जसअन्तर्गत लङ वेभ, मिडियम वेभ र सर्ट वेभ पर्दछन्) को विकासमा नाटकीय परिवर्तन ल्याइदिएको छ । यस विकासका लागि विश्वव्यापी मञ्च Digital Radio Mondiale ले सन् २००३ को आरम्भदेखि आफ्नो गतिविधि सुरु गरिसकेको छ ।

रेडियो प्रसारण केन्द्रको ट्रान्समिटरदेखि श्रोताका रेडियो सेटसम्म तरंगहरू दुई किसिमले पुग्छन् । जमिनबाट र आकाशबाट । ग्राउन्ड वेभ अर्थात् जमिनको सतहबाट रेडियो तरंगहरू प्रत्यक्ष रुपमा अथवा सीधैं रेडियो सेटहरूमा जान्छन् भने स्काई वेभ अर्थात् आकाशबाट अप्रत्यक्ष रुपमा प्रविधिगत रुपमा रेडियो प्रसारणका तीन रुप हुन्छन् ।

क. मिडियम वेभ ।

ख. सर्ट वेभ ।

ग. फ्रिक्वेन्सी मोडुलेसन वा एफ.एम. ।

मिडियम वेभ मध्यम दूरीको राष्ट्रिय वा घरेलु प्रसारण हो । यो प्राय: ग्राउन्ड वेभ प्रविधिमै आधारित हुन्छ ।

यसैगरी सर्ट वेभ अन्तर्राष्ट्रिय प्रसारणका लागि उपयोगमा ल्याइन्छ र यसका लागि स्काई वेभ प्रणाली प्रयोग हुन्छ । यी दुवैभन्दा फरक फ्रिक्वेन्सी मोडुलेसन अथवा एफ.एम. प्रसारण हुन्छ । हुनत: एफ.एम. प्रसारण ग्राउन्ड वेभ प्रणालीमै आधारित हुन्छ । तर यसको पहुँच छोटो दूरीमा शक्तिशाली हुन्छ । यसले समेट्ने प्रसारण क्षेत्र ६० देखि १२० माइल हुन्छ ।

ध्वनि तरंगको उतार-चढावलाई बाहक फ्रिक्वेन्सी (Carrier frequency) मा राखिएपछि एम्प्लिच्युड मोडुलेसन बन्दछ । बाहक फ्रिक्वेन्सीको दालेन विस्तार वा "एम्प्लिच्युड" ध्वनि संकेतअनुसार परिवर्तन हुन्छ भने बाहक फ्रिक्वेन्सीमा कुनै परिवर्तन हुँदैन । यसपछिको ए.एम. सिग्नलमा बाहक "फ्रिक्वेन्सी" सँगसँगै माथिल्लो र तल्लो साइड ब्यान्ड हुन्छ । यसलाई "डबल साइड ब्यान्ड" एम्प्लिच्युड मोडुलेसन अथवा बोलीचालीको भाषामा ए.एम भनिन्छ ।

सर्ट वेभ ब्यान्डचाहिँ विश्वव्यापी रुपमा आपसमा रहेका संकेत वा "सिग्नल" हरूको "खिचडी" हो । सर्ट वेभमा शक्तिशाली रेडियो केन्द्रका आवाजमात्रै स्पष्ट सुनिन्छन् । यो प्रतिस्पर्धाका हिसाबले निकै खर्चिलो हुन्छ ।

## सामुदायिक रेडियो

समुदायका मानिसहरूको संगठित समूह, निकाय वा संघ-संस्थाले समुदायकै हितका लागि स्थापना गरेको र समुदायकै हितका लागि उपयोगी सामग्री तयार गरेर प्रसारण गर्ने गैरनाफामूलक रेडियो नै सामुदायिक रेडियो हो । सामुदायिक रेडियो समुदायको सुखदु:खको साथी हो । सामुदायिक रेडियोमा प्रसारण हुने कार्यक्रमहरूमा स्थानीय भाषा, साहित्य, कला र संस्कृति सुदृढीकरण र विकास तथा स्थानीय समस्या र चासोको विषयलाई बढी प्राथमिकता दिइन्छ ।

प्रसारणको लामो इतिहास बनाइसकेको सार्वजनिक रेडियो बढी सरकारमुखी भएकाले यसले आमनागरिकका गुम्सिएका धारणा तथा सोचलाई मुखरित गर्नपट्टि चासो देखाउन सकेन । यसले गर्दा सार्वजनिक रेडियोको विकल्प खोजिन थालियो । यो कामको सुरुवात बेलिभियाका खानी मजदुरहरूले गरे । सन् १९४७ मा बोलिभियाका खानी मजदुरहरूले आफ्नो हकहित संरक्षण र प्रवर्द्धन गर्ने उद्देश्यले "भ्वाइस अफ द माइनर" नामक सामुदायिक रेडियो स्थापना गरे । जसबाट सामुदायिक रेडियोको सूत्रपात हुन पुग्यो । यो रेडियोको लोकप्रियता यतिसम्म बढ्यो

कि विभिन्न स्थानका कोइलाखानीहरूमा सामुदायिक रेडियो खोल्ने लहर चल्यो । फलस्वरुप २० भन्दा बढी यस्ता रेडियो स्थापना भए र ती रेडियोहरूलाई समग्रमा खानी वा माइनर्स रेडियो भन्न थालियो । यी रेडियोहरूले प्रसार गरेका कार्यक्रम तथा अन्य सामग्री यति सशक्त बने कि तिनले सम्पूर्ण खानी मजदुरलाई उद्वेलित बनाए र उनीहरूलाई आफ्नो हकअधिकार र दायित्वका लागि लड्न सक्षम बनाए ।

सामुदायिक रेडियोको प्रभावकारिता बढ्दै जाँदा त्यसप्रति धार्मिक संगठनहरू पनि आकर्षित भए । परिणामस्वरुप कोलम्बियाका योकिन सेल्सेडो नामक पादरीले स्थानीय सुटाटेन्जा भन्ने गाउँमा रेडियो सुटाटेन्जाको सुरुवात गरे । उनको उद्देश्य स्थानीय किसान तथा श्रमिकहरूलाई धर्मप्रति बढी आस्थावान बनाउनका साथै शिक्षित बनाउनु थियो । शैक्षिक प्रसारणको रुपमा सुरु गरे पनि कालान्तरमा रेडियो सुटाटेन्जाले खेलकुद, मनोरञ्जन, कृषि, स्वास्थ्य आदि विषयलाई पनि समावेश गर्‍यो । पछि गएर यही रेडियो सामुदायिक हितसम्बन्धी कार्यक्रम उत्पादन र प्रसारण गर्ने सामुदायिक रेडियोको दृष्टान्त बन्यो ।

रेडियो सुटाटेन्जाको सफलतापछि चर्चहरूले सामुदायिक रेडियोको माध्यमबाट राम्रै फाइदा लिए । धर्म प्रचार साथसाथै शिक्षा प्रचारको गतिलो माध्यमको रुपमा सामुदायिक रेडियोले कोलम्बियामा झन्डै चालीस वर्ष प्रभावशाली छाप राख्यो । तर विस्तारै चर्चहरूबीचकै कलह र विवादको भुँमरीमा सामुदायिक रेडियो मुछिन पुगेकाले सरकारीलगायत अन्य स्रोत तथा सहयोगमा कटौती हुँदै गएपछि यी रेडियोहरू क्रमश: बन्द हुँदै गए ।

विकास तथा चेतनाको संवाहकको रुपमा रहेको सामुदायिक रेडियोको प्रभावकारिताप्रति प्रत्येक सरकार सशंकित रहने गरेका उदाहरण प्रशस्त पाइन्छन् । सन् ७० को दशकअघिसम्म अफ्रिका तथा एसियाका नवस्वतन्त्र राष्ट्रहरू तथा उपनिवेशको गहिरो छाप परेका राष्ट्रहरूमा सामुदायिक रेडियोलाई शंकाको दृष्टिले हेरिन्थ्यो । यिनका उपयोग सही रुपमा गर्न सकिएको खण्डमा समाजमा सकारात्मक परिवर्तन ल्याउने सहज हुने कुरामा अब दुईमत छैन । नेपाल जस्तो पहाडै पहाडले

भरिएको मुलुक अथवा फिलिपिन्स जस्तो टापुहरू मिलेर बनेको देशमा होस् समाजको चेतनास्तर वृद्धि गर्न तथा आमनागरिकलाई विकासको मूलधारमा ल्याउने काममा सामुदायिक रेडियो नै सबैभन्दा बढी प्रभावकारी औजार बन्न सक्तछन् ।

केही वर्षअघिसम्म फिलिपिन्समा सञ्चालित ताम्बुली सामुदायिक रेडियो नेटवर्क सामुदायिक रेडियोहरूको समन्वयको एउटा उदाहरण हो । विभिन्न विचार तथा सम्प्रदायका मानिसहरू समुद्रमा छरिएर रहेका टापुमा बसोबास गर्ने हुनाले केन्द्रीय रुपमा प्रकाशित तथा प्रसारित सामग्रीहरू प्रत्येक टापुमा पुऱ्याउनु कठिन हुने गरेको थियो । तर ताम्बुली रेडियो नेटवर्कमा रहेका २३ वटा भन्दा बढी रेडियोले गर्ने गरेका समन्वयात्मक प्रसारणले भिन्न-भिन्न टापुमा रहेका मानिसबीच सहयोग, समन्वय तथा एकताको भावनामा वृद्धि गरायो । ताम्बुली नेटवर्क एउटा परियोजनाअन्तर्गत सञ्चालित थियो र सो परियोजनाले नयाँ रेडियो स्टेसन स्थापना गर्न तथा जनशक्ति उत्पादनका लागि तालिम सञ्चालन गर्न सहयोग गर्ने गरेको थियो ।

दक्षिण एसियामा सरकारीस्तरबाट सञ्चालन गरिएको समुदायमुखी पहिलो रेडियो श्रीलंकाको महाबेली रेडियो हो । यो रेडियो स्थापनाको पछाडि रोचक घटना छ । श्रीलंका सरकारले देशमा सिंचाइको अवस्थामा सुधार ल्याउनका लागि महाबेली सिंचाइ परियोजनाको महत्त्वाकांक्षी योजना अघि साऱ्यो ।

यस योजनाका कारण लाखौं किसानहरू विस्थापित भए । किसानहरू विस्थापित भएपछि त्यसको आक्रोश सरकारमाथि सोझै पोखिन सक्ने सम्भावना प्रवल बन्यो । किसानहरूको आक्रोशलाई दबाउन त असम्भव नै थियो । त्यसैले उनीहरूको विचारलाई स्वतन्त्र रुपमा मुखरित गर्न दिइनु जरुरी र बुद्धिमानीपूर्ण काम ठहरियो । किसानहरूलाई एकअर्कासँग आफ्ना पिरमर्का साटासाट गरेर वा विचार आदान-प्रदान गरेर आक्रोशित हुनबाट रोक्न महाबेली रेडियो स्थापना गरिएको थियो । तर पृथकतावादी संघर्ष गरिरहेका उत्तरी भेगका तामिलहरूले त्यसको

दुरुपयोग गर्न सक्ने सम्भावना पनि त्यत्तिकै थियो । त्यसैले यसलाई सरकारी नियन्त्रणमा रहेको श्रीलंका ब्रोडकास्टिङ कर्पोरेसन (एस.एल.बी.सी) को मातहतमा राखियो । सरकारी नियन्त्रणमा रहे पनि महाबेली रेडियो उसको पहुँच क्षेत्रभित्र निकै लोकप्रिय भयो । कार्यक्रम निर्माताहरू किसानका घरदैलोमै पुग्थे, तिनका अनुभव उनीहरूकै आवाजमा रेकर्ड गर्थे र स्टुडियोमा ल्याएर प्रसारण गर्ने गरिन्थ्यो । मौका परेका बेला किसानहरूलाई नै समूहमा बाँडेर कार्यक्रम सञ्चालन गर्न लगाइन्थ्यो । यो कार्यले किसानहरूमा रेडियोप्रति आस्था र प्रेम जाग्यो । उनीहरू महाबेली रेडियोलाई आफ्नो सुखदु:खको साथी मान्दछन् । यो आस्थालाई महाबेली रेडियोले सामाजिक चेतना फैलाउने माध्यमको रुपमा प्रयोग गऱ्यो । रेडियोबाट स्वास्थ्य, शिक्षा, कृषि, पशुपालन आदि विषयमा कार्यक्रमहरू प्रसारण गर्न थालिएपछि किसानहरूमा यसको निकै सकारात्मक प्रभाव पऱ्यो ।

सन् ७० को दशकमा युरोप र अस्ट्रेलियामा स्वतन्त्र वा सामुदायिक रेडियो सञ्चालन गर्ने लहर चल्यो । यो लहरले सरकार नियन्त्रित रेडियोको विज्ञापन संकलन तथा प्रसारणबाट हुने आम्दानीलाई प्रभावित गऱ्यो । तर पनि स्वतन्त्र रेडियोको लहर चलिसकेकाले सरकारले त्यसलाई रोक्न सकेन । बरु निश्चित सीमाभित्र बाँधेर वैधता प्रदान गर्नु नै उचित ठानियो । अस्ट्रेलियामा सन् ७० को मध्यतिर सामुदायिक रेडियोहरूलाई विज्ञापन संकलन गर्न नपाउने, विज्ञापनमूलक कार्यक्रमहरू प्रसारण गर्न नपाउने, शहरी क्षेत्रमा भन्दा ग्रामीण, जनजातिको बाहुल्य भएका क्षेत्रमा प्रसारण गर्नुपर्ने जस्ता कडिकडाउ नियममा बाँधेर प्रसारण अनुमति प्रदान गरियो ।

तर युरोपेली देशहरूमा सञ्चालित रेडियोहरूको अवस्था बेग्लै रह्यो । शिक्षा र चेतनाको पूर्णविकास भइसकेको युरोपमा कडिकडाउ नियम लागू गर्न सम्भव रहेन । फलस्वरुप सन् ७० को दशकमा स्वतन्त्र रेडियोका नाममा खुलेका धेरैजसो रेडियोलाई प्रसारण अनुमति दिइयो र तीमध्ये अधिकांश रेडियो सामुदायिक रेडियोको रुपमा रुपान्तरित भए ।

विभिन्न मुलुकमा सामुदायिक रेडियोको लहर चलेको अवस्थामा दक्षिण एसिया यसबाट अछुतो रहन सकेन । विभिन्न राजनीतिक मतभिन्नता तथा देखावटी नियम-कानुनहरूका कारण दक्षिण एसियामा सामुदायिक रेडियोको सञ्चालन हुन सकिरहेको थिएन । हुनत दक्षिण एसिया जनसंख्याको दृष्टिले ठूलो र महत्त्वपूर्ण छ । तर यस क्षेत्रका शासक वर्गमा शिक्षा तथा सूचना प्रविधिको विकासलाई त्यति छिटो र सहज ढंगमा ग्रहण गरिहाल्ने प्रवृत्ति रहेको पाइँदैन । तथापि नेपाली शासकहरूले छिटै सूचना प्रविधि भित्र्याएर प्रशंसायोग्य काम गरेका छन् । तैपनि सैद्धान्तिक, नीतिगत र कानुनी रुपमा रेडियो प्रसारणलाई स्वतन्त्र र प्रजातान्त्रिक बनाउने व्यवस्था भने विक्रम संवत् २०४६ सालमा बहुदलीय व्यवस्थाको पुनर्स्थापनापछि मात्र सम्भव भयो ।

वि.सं. २०४६ सालमा बहुदलीय व्यवस्थाको पुनर्स्थापना भएपछि श्री ५ को सरकारले २०४९ सालमा प्रकाशमा ल्याएको राष्ट्रिय सञ्चार नीतिले निजी क्षेत्रका संगठित संस्थालाई पनि निश्चित क्षेत्रमा फ्रिक्वेन्सी मोडुलेसन (एफ.एम.) प्रसारण प्रणाली स्थापना गरी शिक्षाप्रद र मनोरञ्जनात्मक कार्यक्रम प्रसारण गर्न दिने व्यवस्था गऱ्यो । यही सञ्चार नीतिको आधारमा बनेको राष्ट्रिय प्रसारण ऐन २०४९ मा शिक्षाप्रद, मनोरञ्जनात्मक तथा समाचारमूलक कार्यक्रम प्रसारण गर्न एफ.एम. प्रसारण प्रणाली स्थापना गर्न चाहने व्यक्ति वा संगठित संस्थालाई कार्यक्रम प्रसारण गर्न इजाजत दिन सकिने व्यवस्था गरियो । यो ऐन नेपालको प्रसारण क्षेत्रमा कोशेढुंगा सावित भयो । तैपनि राष्ट्रिय प्रसारण ऐन लागू भएको तीन वर्षपछि मात्रै २०५२ सालमा राष्ट्रिय प्रसारण नियमावली बन्यो र यसले राष्ट्रिय प्रसारण ऐन कार्यान्वयन गर्न मार्ग प्रशस्त बनायो । २०५४ सालमा आएर नेपालको निजी क्षेत्रले एफ.एम. रेडियो प्रसारणको अनुमति पाउन सुरु गऱ्यो ।

नेपाल वातावरण पत्रकार समूह एफएम रेडियो सञ्चालन गर्न पाउने निजी क्षेत्रका संस्थाहरूको पंक्तिमा पहिलो हुन पुग्यो । यो समूहले नेपालमा पहिलोपटक २०५४ साल जेठ ९ गते स्वतन्त्र सामुदायिक

रेडियो “रेडियो सगरमाथा” स्थापना गऱ्यो । नेपाल वातावरण पत्रकार समूहको स्वामित्वमा रहेको रेडियो सगरमाथा नेपालको मात्रै होइन दक्षिण एसियाकै पहिलो स्वतन्त्र सामुदायिक रेडियो हो ।

## प्रारम्भिक अवस्था

अहिले नेपालमा सार्वजनिक हितप्रति प्रतिबद्ध तथा समर्पित स्वतन्त्र सामुदायिक रेडियोको अवधारणा सहज बन्न गएको छ । तर यसका प्रारम्भिक दिनहरू निकै नै कठिन र चुनौतीपूर्ण थिए । समाजप्रति समर्पित दक्षिण एसियाकै पहिलो स्वतन्त्र सामुदायिक रेडियोको रुपमा २०५४ साल जेठ ९ गते रेडियो सगरमाथाको ध्वनि नेपाली आकाशमा गुञ्जिन थालेपछि सम्पूर्ण बाधा, व्यवधान तथा असहमतिका स्वरहरू समर्थनमा बद्लिन थाले भने कतिपय व्यक्ति तथा संस्थाहरू सामुदायिक रेडियो स्थापनाको जस लिन जुर्मुराए । यसपछि सामुदायिक तथा व्यापारिक प्रयोजनका लागि धमाधम एफ.एम. स्टेसनहरू खुल्न थाले । तर अत्यावश्यक भौतिक पूर्वाधार र जनशक्तिको अभावमा प्राय:जसो एफ.एम. स्टेसनहरूले प्रस्तुत गर्ने सांगीतिक कार्यक्रमलगायत अन्य कार्यक्रमहरूको शैली र विषयहरूसमेत एकै किसिमका हुने गरेकाले तथा प्रतिस्पर्धाका नाममा हुने अनेकौं गैरव्यावसायिक क्रियाकलापहरूले गर्दा एफ.एम. स्टेसनहरूले बाटो बिराएको भान हुन्छ ।

सामुदायिक रेडियोको हकमा संगठन र व्यवस्थापनको अभावमा तिनको जगै धर्मराएको स्थिति रहेको स्पष्ट देखिएको छ । समाजको रुपान्तरणप्रति प्रतिबद्ध रहेका एवं अर्थलाभको पक्ष गौण रहेका कारण सामुदायिक रेडियोको सफलता सुदृढ संगठन र चुस्त व्यवस्थापनको जगमा नै अडिएको हुन्छ । समुदायको लगानी, परिश्रम तथा आशामा स्थापित सामुदायिक रेडियोको व्यवस्थापन पक्ष सवल र सक्षम हुन नसकेको खण्डमा न त यसले आफ्नो लक्ष्य हासिल गर्न सक्छ न दिगो रहन नै सक्दछ । प्रारम्भिक अवस्थामा रेडियो कसले स्थापना गर्ने भन्ने विषय नै सर्वाधिक बहसको विषय बन्यो र विस्तारै कुनै समूह विशेषले

नीति निर्धारकहरूलाई कुहिरोको कागजस्तै बनाउन सफलता प्राप्त गऱ्यो । यो कुहिरो छाँटियो र नीति-निर्माताहरूले समेत सामुदायिक रेडियोको महत्त्व बुझेको भान पर्न थाल्यो । अप्ठ्यारो सरकारी सोचाइ र मानसिकतामा थियो । एकातिर २००७ सालको प्रजातन्त्र स्थापनापश्चात् स्वतन्त्र विचार सम्प्रेषण गर्न पाउने नेपालीहरूको चाहना पटक-पटक कुण्ठित भएको अवस्था थियो भने अर्कोतिर राणाकालीन मानसिकतामै रहेको शासक वर्गले ३२ वर्ष लामो शासन गर्न सफलता पनि पाएका थिए ।

जनतालाई अँध्यारोमै राख्न र आफ्नो भनाइलाई वा सरकारी भनाइलाई सत्य प्रमाणित गर्न सम्पूर्ण बलवर्कत लगाउने प्रवृत्ति हावी भइरहेको अवस्थामा सामुदायिक रेडियोको अवधारणा अघि बढ्नु निश्चित रुपमा क्रान्तिकारी कार्य थियो । त्यसैले सामुदायिक रेडियोको प्रभावकारिताका बारेमा तत्कालीन सरकार सशंकित भएको महसुस हुन्छ । यही आशंकाले ग्रस्त भएर सरकारले नेपाल वातावरण पत्रकार समूहको लामो प्रयासलाई एउटा कुनामा पन्छाएर राखेको थियो । तर जब रेडियोको लहरलाई रोक्न असम्भव प्रायः बन्यो, सरकारले नेपाल वातावरण पत्रकार समूहलाई सामुदायिक रेडियो (रेडियो सगरमाथा) सञ्चालन तथा प्रसारणको अनुमति प्रदान गऱ्यो ।

नेपाल वातावरण पत्रकार समूहले सामुदायिक रेडियोको विकास तथा विस्तारका लागि सहयोग लिन सक्ने अन्य तीन संस्था नेपाल प्रेस इन्स्टिच्युट, हिमाल एसोसिएसन र वर्ल्ड भ्यू इन्टरनेसनल फाउन्डेसनलाई रेडियो सगरमाथाको सञ्चालक समितिमा निमन्त्रणा गरी राख्यो । तर पछि ती तीनवटा संस्था र नेवापसबीच रेडियो सञ्चालनमा रहेको गहिरो मतभेदका कारण रेडियो सगरमाथाको व्यवस्थापनमा केही विचलन आएको आभास मिल्यो । फलस्वरुप नेवापसले अन्य तीनवटा संस्थालाई रेडियोको सञ्चालन समितिबाट बिदा गर्नुपऱ्यो ।

राजधानीकै मुटुमा रहेको रेडियोको त अवस्था यो थियो भने राजधानी बाहिरका रेडियोहरूको अवस्थामा झन् नाजुक थियो । व्यापारिक

प्रयोजनका रेडियोहरूको स्थिति तुलनात्मक रुपमा सामुदायिक रेडियोको भन्दा केही उकासिएको भए पनि तिनले पनि आशाअनुरुपको लाभ गर्न सकेनन् ।

## वर्तमान अवस्था

सामुदायिक रेडियो समुदायका सबै सदस्यको साझा सम्पत्ति हुने भएकाले यस प्रकारको रेडियो स्थापना तथा सञ्चालनमा समुदायको संलग्नता अपरिहार्य हुन्छ । तर नेपाल जस्तो पिछडिएको मुलुकमा यस किसिमका संलग्नताप्रति जनता उदासीन भएको पाइन्छ । आर्थिक हिसाबले पिछडिएको समुदायले सञ्चालन गर्न रेडियोका लागि आवश्यक पर्ने आर्थिक स्रोत जुटाउने काम नै प्रमुख समस्या बनेको छ । सामुदायिक रेडियोको सञ्चालन तथा व्यवस्थापनमा संलग्न हुने व्यक्तिहरू सामाजिक भावनाका हुनु अपरिहार्य त छँदैछ, उनीहरू सामुदायिक रेडियोको अवधारणाप्रति जागरुक र स्वयंसेवी भावनाका हुनु पनि उत्तिकै जरुरी हुन्छ । वर्तमान स्थितिमा नेपालमा तीन प्रकारका सामुदायिक रेडियो देखिएका छन्, ती हुन्:

क. गैरसरकारी निकाय वा संस्थाद्वारा स्थापित सामुदायिक रेडियो ।

ख. स्थानीय सरकारद्वारा सञ्चालित सामुदायिक रेडियो ।

ग. सहकारीद्वारा सञ्चालित सामुदायिक रेडियो ।

नेपाल वातावरण पत्रकार समूहद्वारा सञ्चालित “रेडियो सगरमाथा” गैरसरकारी निकाय वा संस्थाद्वारा स्थापित दक्षिण एसियाकै पहिलो स्वतन्त्र सामुदायिक रेडियो हो । यो रेडियो स्थापनाका लागि आरम्भमा संयुक्त राष्ट्रसंघीय शैक्षिक तथा वैज्ञानिक आयोग (युनेस्को) ले सहयोग गरेको थियो । नेपाल वातावरण पत्रकार समूहको वर्षेनी निर्वाचित हुने कार्यसमितिले गठन गरेको कार्य सञ्चालन समिति र त्यसले नियुक्त गरेको स्टेसन म्यानेजरले यो रेडियो सञ्चालन गर्दछन् । रेडियोको सम्पूर्ण व्यवस्थापकीय तथा सम्पादकीय नीति यिनै तीनवटा निकायको

संयुक्त पहलमा तय हुन्छ ।

पाल्पा जिल्लामा सञ्चालित "रेडियो मदनपोखरा" र काठमाडौं मेट्रो एफ.एम. स्थानीय सरकार, गाविस र नगरपालिकाद्वारा सञ्चालित रेडियोका उदाहरण हुन् । यी रेडियोहरू नगरपालिका तथा गाविसका कार्यसमितिद्वारा गठन भएका सञ्चालक समिति तथा बोर्डद्वारा सञ्चालित छन् । सञ्चालक समिति र बोर्डद्वारा नियुक्त व्यवस्थापकले यी रेडियोका दैनिक कार्य सञ्चालन गर्दछन् ।

लुम्बिनी अञ्चलमा सञ्चालित रेडियो लुम्बिनी सहकारी संस्थाद्वारा सञ्चालित रेडियोको उदाहरण हो । यो रेडियो सहकारी ऐन र नियमअनुसार चल्ने गर्दछ । सामुदायिक भावनाबाट प्रेरित समुदायका सदस्यको सहभागिता, लगानी तथा व्यवस्थापनमा सञ्चालन हुने भएकाले यो बढी प्रतिनिधिमूलक संस्था बन्न सक्छ ।

## समस्या तथा चुनौतीहरू

आर्थिक स्रोतको अभाव तथा व्यवस्थापकीय कमजोरीहरू सामुदायिक रेडियोसामु रहेका मुख्य समस्या तथा चुनौती हुन् । सामुदायिक रेडियोको रुपमा गैरसरकारी संस्थाद्वारा स्थापित रेडियो सगरमाथाका सामु देखापरेको समस्या भनेको मूलत: आर्थिक नै हो । युनेस्कोको सहयोग बन्द भएपछि साझेदार बनेर आरम्भमा देखापरेका संस्थाहरू अलग्गिनु तथा रेडियो सगरमाथाले यथेष्ट सहयोग पाइसकेको छ भन्ने मुद्दा प्रचार हुने गरेकाले पनि रेडियो सगरमाथाको क्रमिक विस्तारमा चुनौती देखा परेको छ ।

यसैगरी रेडियो मदनपोखरा तथा मेट्रो एफ.एम. गाविस तथा नगरपालिकाद्वारा सञ्चालित सामुदायिक रेडियो भएकाले यी रेडियो नगरपालिका तथा गाविसको निश्चित बजेटमा सञ्चालन भइरहेका छन् । यो स्थितिले सामुदायिक रेडियोको विस्तारमा समस्या खडा गरेको छ । साथै रेडियोको आवश्यकताअनुसार कुनै पनि नयाँ दरबन्दी सिर्जना गर्दा वा नियुक्ति गर्दा लामो प्रशासकीय प्रक्रिया पूरा गर्नुपर्ने बाध्यता यसखाले रेडियोका चुनौती हुन् ।

सरसर्ती हेर्दा रेडियो लुम्बिनी सहकारीद्वारा सञ्चालित भएकाले यसमा त्यति ठूलो समस्या र चुनौती नहोलान् भन्ने बुझाई रहन सक्छ । तर यसका पनि आफ्नै बेदनाहरू छन् । सहकारी ऐन तथा नियमहरूको दायरा संकुचित हुनु, व्यक्ति संस्थाभन्दा माथि बस्न खोज्नु जस्ता अप्ठ्याराहरू समस्याको रुपमा आइपर्न सक्छन् भने आफ्नो प्रभावक्षेत्र विस्तार गर्नका लागि परेको आर्थिक कठिनाई यसका चुनौती हुन् ।

समष्टिमा सामुदायिक रेडियोले बग्रेल्ती खुलेका तथा खुल्ने क्रममा रहेका व्यापारिक प्रयोजनका एफ.एम. रेडियोसँग प्रतिस्पर्धा गर्नुपरिरहेको छ । सरकारी निकायमा तथा नीति नियममा लापरबाही अपनाइएका कारण व्यापारिक रेडियो स्टेसनहरूले सामुदायिक रेडियोलाई धराशयी बनाउने प्रयास नथालेका होइनन् । सञ्चार नियमावलीमा एफ.एम. स्टेसनको ट्रान्समिटरको क्षमता ५०० वाटभन्दा बढी हुन नहुने भन्ने उल्लेख हुँदाहुँदै कान्तिपुर एफ.एम.ले १० हजार वाटको ट्रान्समिटर जडान गर्दा पनि सरकारले यसतर्फ आँखा चिम्ली दिँदा सामुदायिक रेडियोले स्थानीय रुपमा विज्ञापन प्रसार गरेबापत प्राप्त गर्ने आर्थिक स्रोतमा ठूलो असर परेको छ ।

केही निश्चित सरकारी अधिकारीको अदूरदर्शिताको परिणाम भनौं, रेडियो सगरमाथाले प्रसारण इजाजत पाएको पाँच वर्षको अवधिमा डेढ दर्जनजति एफ.एम. रेडियोले प्रसारण अनुमति प्राप्त गरे । तर तिनमा सेवामुखी रेडियोको संख्या नगन्य मात्र थपिए ।

नाफामूलक एफ.एम. रेडियोसरह दर्ता शुल्कबापत ठूलो रकम बुझाएर पनि वर्षेनी नवीकरण दस्तुर र सञ्चालन खर्चको समेत चार प्रतिशतका दरले राजश्व बुझाउनुपर्ने अव्यावहारिक नीतिका कारण सामुदायिक रेडियो सञ्चालनलाई निरुत्साहित नै गर्न खोजेको भन्दा अत्युक्ति नहोला । यसको अर्को प्रमाण नाफामूलक उद्देश्यबाट सञ्चालित एफ.एम. स्टेसनहरूको अनुकूलताका लागि मन्त्रिपरिषद्बाट समेत विशेष निर्णय गरिने तर अर्कोतिर सामुदायिक रेडियो सञ्चालनका

लागि झिकाइएका उपकरणमा नियमअनुसार पाइने भन्सार छुटको सुविधाबाट समेत वञ्चित गरिएका विडम्बना र भेदभावपूर्ण व्यवहार सामुदायिक रेडियोले पाइलैपिच्छे भोग्नु परिरहेको छ ।

यी विषयलाई हेर्दा या त सरकार सामुदायिक रेडियोको उपादेयताबाट अनभिज्ञ छ अथवा केही ओहोदावालाहरूको भ्रष्ट मनोवृत्तिबाट ग्रसित छ भन्न सकिन्छ ।

नेपालजस्तो अविकसित मुलुकका लागि सामुदायिक रेडियोले विकासको काममा निकै महत्त्वपूर्ण भूमिका खेल्न सक्छ । अधिकांश जनता विकासका पूर्वाधारबाट टाढा रहेका बेलामा कुनै व्यक्ति, समाज, उसको आर्थिक अवस्था, संस्कृतिलगायत सामाजिक विषयहरूतर्फ व्यक्ति, समाज र राष्ट्रकै ध्यानाकर्षण गर्ने काममा सामुदायिक रेडियो नै सबैभन्दा व्यावहारिक माध्यम बन्न सक्छ । राष्ट्रका सम्पूर्ण नीति तथा कार्यक्रमहरू जनताका हित र उनीहरूको जीवनशैलीको उत्थानतर्फ लक्षित हुनुपर्ने सामान्य सिद्धान्त नेपालजस्तो मुलुकमा लागू हुनुपर्ने भए तापनि राजनीतिक अस्थिरता, राजनेता तथा कर्मचारीतन्त्रको भ्रष्ट मनोवृत्तिलगायतका विविध कारणले गर्दा विकासले बाटो बिराएको अवस्था विद्यमान छ । यस अवस्थामा जनचेतना अभिवृद्धि गर्न तथा जनतालाई अझ समुदायहरूलाई तिनका अधिकार तथा दायित्वहरूप्रति जागरुक र चेतनशील बनाउनुमा सामुदायिक रेडियोले अग्रणी भूमिका खेलेका हुन्छन् । सामाजिक परिवर्तनका लागि र व्यक्तिगत जीवनको उत्थानका लागि भूमिका खेलेका समुदायले थप स्रोत तथा ऊर्जा खोज्न सक्छ जसका लागि सामुदायिक चेतनाका लागि सामुदायिक रेडियो अपरिहार्य नै छ ।

सामाजिक परिवर्तन र विकासका लागि सामुदायिक रेडियो एउटा योजनाबद्ध प्रयास हो । यो प्रयास कुनै निश्चित सामाजिक समस्याप्रति जनमानसलाई जागरुक बनाउन अथवा समस्याप्रतिको चेतना रहँदारहँदै पनि त्यसतर्फ उदासीनता देखाउनेहरूलाई घचघच्याएर समस्या समाधानको मूल मार्गमा फर्काउनेतर्फ लक्षित हुन्छ । सामाजिक संलग्नताको प्रक्रियाका माध्यमबाट व्यक्तिलाई उसको आचरणमा सुधार ल्याउन प्रेरित गर्नु सामुदायिक रेडियोको प्रकृति र लक्षण हो । यति हुँदाहुँदै पनि सामुदायिक रेडियोको प्रभावकारिता आफ्नो सेवा कुन समुदाय वा व्यक्ति वर्गमा लक्षित गर्ने भन्ने निक्र्यौल गर्नुमा बढी निर्भर रहन्छ । यिनै कारणले गर्दा सामुदायिक रेडियोका कार्यलाई दुई किसिमले लक्षित गर्न सकिन्छ । पहिलो "समुदाय र व्यक्तितर्फ लक्षित दोस्रो" सेवा र सुविधातर्फ लक्षित ।

व्यावहारिक रुपमा भन्ने हो भने सामाजिक तथा आर्थिक विकासका

लागि सहयोगीको भूमिका खेल्ने कार्यमा सामुदायिक रेडियोको सम्बन्ध सञ्चार प्रविधिसँग मात्रै गाँसिएको हुँदैन । सामुदायिक रेडियोको लक्ष्य सामाजिक मुद्दाहरूको उठान र तिनको समाधानका लागि दबाव सिर्जना गर्नु हो भने प्रविधि त्यो लक्ष्य हासिल गर्न सघाउने साधनमात्रै हो । सामाजिक तहमा गरिने अन्तर्क्रिया जसमा सामुदायिक संगठनहरू, समूह तथा व्यक्ति-व्यक्तिबीच वैचारिक आदान-प्रदानलाई आमसञ्चारको माध्यमबाट राष्ट्रिय मूलप्रवाहमा ल्याउनु सामुदायिक रेडियोको लक्ष्य हो र यो लक्ष्य परिपूर्ति गर्न अथक रुपमा लागिरहनु यसको प्रकृति हो ।

सामाजिक, आर्थिक विकास तथा सामाजिक रुपान्तरणका लागि सामुदायिक रेडियोको भूमिका एउटा निरन्तर प्रक्रिया हो । तर रेडियोबाट प्रवाह हुने सूचना तथा जानकारीहरूले देशमा सामाजिक परिवर्तनका लागि बनाइएका नीति तथा कार्यक्रम जो कार्यान्वयनमा आउने हुन्छन्, तिनलाई व्यवहारमा लागू गर्न सघाउने माध्यमको भूमिका निर्वाह गर्न सक्छन् ।

सामाजिक परिवर्तनका लागि बनाइएका नीति, लक्ष्य तथा कार्यक्रमको कार्यान्वयनका लागि मार्ग प्रशस्त गर्न अथवा गलत नीति छन् भने तिनलाई सही मार्गमा ल्याउने प्रयासका लागि सामुदायिक रेडियोलाई विविध विधाका विज्ञहरूको सहयोग, सुझावको आवश्यकता पर्दछ । किनकि सामुदायिक रेडियोको प्रसारक वा कार्यक्रम निर्माता अथवा एक क्षेत्रको विज्ञले सबै क्षेत्रको विशिष्टता हासिल गर्न सक्दैन वा गरेको हुँदैन ।

आफ्नो प्रकृति तथा लक्ष्यलाई कायम राख्न सामुदायिक रेडियोका लागि समाजशास्त्री, मानवशास्त्री तथा सामाजिक विज्ञानविद्को आवश्यकता पर्दछ । ताकि समाजको दृष्टिकोण, सोचाइ तथा व्यवहारको शैली साथसाथै समाजलाई अघि बढाउने काममा तेर्सिएका बाधा अड्चनहरू ठम्याउन सजिलो परोस् र ती विषयहरूलाई सामुदायिक रेडियोले समयमै र उचित तरिकाले उठाउन सकोस् ।

सामाजिक कार्यकर्ता, शिक्षाविद् तथा सञ्चारकर्मीहरूको योगदानको

आवश्यकता पनि सामुदायिक रेडियोलाई उत्तिकै पर्दछ । किनकि विशेषज्ञहरूले गरेका अनुसन्धानबाट प्राप्त निष्कर्षलाई सञ्चारकर्मीहरूले मनन गरी त्यसअनुसारका कार्यक्रमहरू प्रसार गर्नु उनीहरूको दायित्व हुन आउँछ ।

## जनसहभागिता

सञ्चारको सशक्त माध्यमका रुपमा सामुदायिक रेडियोले समाजमा विद्यमान कुरीतिहरू हटाउन ठूलो भूमिका खेल्न सक्छ । जनसहभागिता र श्रोता सहभागिताबिना यस्तो कार्य सम्भव हुन सक्दैन । त्यसैले समाजमा विद्यमान समस्याहरू पहिचान गर्न, तिनको निराकरणका उपाय पत्ता लगाउन तथा समस्या समाधानका लागि भूमिका निर्वाह गर्न पनि श्रोता सहभागिता वा जनसहभागिता अति नै महत्त्वपूर्ण हुन्छ ।

जनसहभागिताले समाजमा रहेका समस्या पहिचान, श्रोताहरूको चेतनाको स्तर, उनीहरूको मूल्य मान्यता, बानीव्यहोरा आदि समेत पहिचान गरी त्यसअनुसारका कार्यक्रम तयार गरेर प्रसारण गर्नमा सामुदायिक रेडियोहरूलाई मार्गदर्शन गर्न सक्दछ । यसबाट सामुदायिक रेडियो तथा सामाजिक संघ-संस्थालगायत समाजका अन्य अंगहरूबीच सामन्जस्य कायम हुनजान्छ । यो सामन्जस्यका आधारमा प्रत्येक व्यक्तिले सामाजिक सहयोग प्राप्त गर्नुका साथै कुनै पनि समस्या तथा परिस्थितिको सही समाधान निकाल्ने कार्यमा आफू एक्लिएको महसुस गर्नुपर्दैन । रेडियो कार्यक्रममा हुने सहभागिताले श्रोतालाई समाजमा आफ्नो महत्त्व कति छ भन्ने कुराको अनुभूति गराउँछ । यो अवस्थाले सामुदायिक रेडियो कसका र केका लागि हो भन्ने अन्योलको अन्त्य गराउँछ । श्रोता आफैंले यो मेरो रेडियो हो र यसले मेरा लागि प्रसारण गर्छ भन्ने महसुस गर्छ । श्रोतामा सामुदायिक रेडियोले आफ्नो छाप छोडिसकेपछि श्रोता र रेडियोबीच एउटा अदृश्य सेतु बन्न जान्छ र रेडियोले आफ्ना श्रोताबाट बारम्बार सुझाव, सहभागिता, प्रतिक्रिया आदि प्राप्त गर्छ, जसले कार्यक्रमहरूको स्तर वृद्धि गर्न मद्दत पुऱ्याउँछ ।

नेपालमा रेडियो सगरमाथा, रेडियो मदनपोखरालगायतका सामुदायिक रेडियोहरूले श्रोता सहभागितालाई बढीभन्दा बढी प्राथमिकता दिएकै कारण यिनीहरू श्रोतामाझ स्थापित भएका हुन् र समुदायमा तिनको गहिरो छाप परेको हो भन्नुमा अत्युक्ति नहोला। फलस्वरुप सामुदायिक रेडियोका श्रोताहरूको सक्रिय सहभागिताले श्रोता भनेका रेडियोले प्रसार गरेका सामग्री सुन्नेहरूको जमातमात्र होइन, रेडियोबाट कस्ता सूचना प्रसार भएमा बढीभन्दा बढी लाभकारी हुनसक्छन् भनेर सूचना दिने तथा आफ्ना आवश्यकताका कुरा प्रसार गर्न लगाउने दबाव समूह पनि हो भन्ने मान्यता स्थापित गर्न सघाउ पुऱ्याएको छ। श्रोताको प्रत्यक्ष र सक्रिय सहभागिताले रेडियोको प्रभावलाई समेत समाजमा स्थापित गराउँछ।

उदाहरणका लागि रेडियो सगरमाथाबाट प्रसारण हुने साप्ताहिक कार्यक्रम "शान्ति अभियान" र "संजीवनी" कार्यक्रम। "शान्ति अभियान" कार्यक्रम समाजमा रहेको द्वन्द्व व्यवस्थापनतर्फ लक्षित कार्यक्रम हो भने संजीवनी महिला तथा बालबालिकाको स्वास्थ्य र पोषणबारे जानकारी दिलाउने कार्यक्रम। यी दुवै कार्यक्रम काठमाडौं बाहिरका सातवटा एफ.एम. रेडियोबाट प्रसारण भएका छन्। श्रोताहरूले यी कार्यक्रमबारे पठाएका सुझाव तथा प्रतिक्रियाले कार्यक्रमको सामग्री छनौट तथा प्रसारणमा उल्लेख्य सुधार ल्याएको मान्नुपर्दछ।

## नीति तथा कार्यक्रमबारेको स्पष्ट अवधारणा

सामाजिक परिवर्तन र समाजको विकासका मूलभूत आवश्यकतातर्फ लक्षित तथा तिनको पहिचान एवं प्राथमिकताका बारेमा सचेत सामुदायिक रेडियोले समुदायको हित र कल्याणलाई जोड दिएको हुन्छ। यसका साथै व्यक्ति र उसको परिवारको जीवनशैलीमा परिवर्तन ल्याउन महत्त्वपूर्ण भूमिका खेल्छ। व्यक्ति र परिवारप्रति लक्षित सामुदायिक रेडियोको कार्यक्रमले नै सम्पूर्ण समाजमा परिवर्तन ल्याउन मुख्य भूमिका खेल्ने गर्छ। नेपाल जस्तो भौगोलिक विकटताले ढाकिएको देशमा विकास

कार्यलाई लक्षित गरेर तर्जुमा गरिएका नीति तथा कार्यक्रमलाई जनस्तरसम्म पुऱ्याउन अहम् भूमिका खेल्ने सञ्चारमाध्यमको पहुँच सीमित हुने भएकाले सामुदायिक रेडियोहरू नै सञ्चारका सम्पूर्ण माध्यमको प्रतिनिधि बन्न पुगेका छन् । विकास निर्माणका क्रियाकलापसँग प्रत्यक्ष रुपमा सम्बद्ध समुदायलाई सहभागी गराई आफ्ना क्रियाकलापहरू सञ्चालन गर्ने हुनाले सामुदायिक रेडियोहरूले आफ्ना कार्यक्रमहरूमा नीति तथा कार्यक्रमबारे स्पष्ट अवधारणा बनाउनु अपरिहार्य हुन्छ । आधुनिक समाजमा देखिने सामाजिक, आर्थिक, वातावरणीयलगायतका समस्या तथा बढ्दो शहरीकरणको आदि समस्याले निम्त्याउने सकारात्मक र नकारात्मक असर स्वीकार्न बाध्य भएका जनता खासगरी महिला तथा युवा वर्गको ती परिणामसँग प्रत्यक्ष वा परोक्ष सम्बन्धलाई प्रतिविम्बित गर्ने किसिमका नीति तथा कार्यक्रम उत्पादनमा जोड दिनु अति नै आवश्यक छ । सामुदायिक रेडियोले यसो गर्न सकेको खण्डमा समयको मागसँगै रेडियोको लोकप्रियता अझ बढ्न जान्छ । झन्डै चालीस वर्षअघि भित्रिएको विकास पत्रकारिता शब्द, सरल वा सहज ढंगले प्रयोगमा ल्याएजस्तै अबको समयमा यो शब्दको मर्म बुझ्नु र त्यसको सदुपयोग गर्नका लागि विचार तथा व्यवहारको मन्थन गर्नेतर्फ केन्द्रित हुँदै जानुपर्ने समय हो ।

एकताका असीमित जस्तै लाग्ने प्राकृतिक स्रोत तथा सम्पदालाई जनसंख्या वृद्धिले सीमित प्राय: बनाइसकेको छ । समाजले विकास भनेको वृद्धि हुनु हो भन्ने मान्यतालाई समेत पन्छाइसकेको छ । हाल आएर स्रोत, साधन र उपभोगबीच सन्तुलन कायम गरी सापेक्षिक रुपमा लक्ष्य हासिल गर्नुलाई विकास मान्न थालिएको छ । तर नेपालमा विकासबारेको यो बुझाई जनस्तरसम्म प्रभावकारी रुपमा पुऱ्याउने माध्यमको विकास भएको पाँच वर्षमात्रै पुगेको छ । तथापि सरकारमा समेत पहुँच भएका केही व्यक्तिहरूले यसप्रति बक्रदृष्टि राख्ने गरेका छन् । सामुदायिक रेडियोका लागि आफ्ना नीति तथा कार्यक्रम तय गर्नमा आइपरेको यो अर्को चुनौती हो । समाजको बृहत्तर विकासतर्फ लक्षित कार्यक्रमहरूले समाजका प्रत्येक सदस्यका व्यक्तिगत जीवनशैलीमा सुधार ल्याउनेतर्फ

ध्यान केन्द्रित गरेका हुन्छन् । उदाहरणका लागि एउटा किसानले खेतीपाती गर्दा उन्नत जातका बीउ-बिजन तथा सुधारिएको प्रविधिबाट तयार गरिएको मलखाद प्रयोग गर्न कन्जुस्याइँ गरेन भने उसले राम्रो फसल उत्पादन गर्नसक्छ । जसले उसको आर्थिक स्थिति सुधारिदिन्छ । घरेलु उद्योगहरूमा नयाँ प्रविधिको प्रयोग गर्दा खर्च तथा समयमा कटौती हुन जान्छ । साथै उत्पादनहरू बलियो र टिकाउ हुनुका साथै आकर्षकसमेत बन्छन् भन्ने जानकारी ग्रामीण क्षेत्रमा पुऱ्याउने र त्यसलाई ग्रहण गर्न उत्प्रेरित गर्ने काम सामुदायिक रेडियोको हो । तर यस किसिमको जानकारी प्रचारमा ल्याउन सामुदायिक रेडियोका कार्यक्रम निर्माताहरूले समाज, व्यक्ति, परम्परा तथा सामुदायिक संगठन तथा समूहहरूको संवेदनशीलतालाई गहन रुपमा अध्ययन तथा मनन गरेको हुनैपर्छ । अन्यथा लक्ष्य हासिल गर्न निकै कठिन पर्दछ । समाजको ग्रहणशीलता, ज्ञान, दृष्टिकोण र व्यवहारको प्रक्रिया अध्ययन/अनुसन्धान हुन जरुरी छ । यसका लागि तालिम आवश्यकता हुन्छ । किनकि सामाजिक परिवर्तनको प्रक्रिया समाजमै विद्यमान सञ्चारका साधनको सही र सटिक उपयोगबाट सुरु गर्नु उपयुक्त हुन्छ ।

सामुदायिक रेडियोका लक्षित समूह समाजअनुसार भिन्न हुन्छन् । शहरी इलाकामा रहेका सामुदायिक रेडियोले कृषि उपजका बारेमा कुरा गर्नु बालुवामा पानी हालेसरह हुन्छ । हुनत कृषि उपजका बारेमा शहरी क्षेत्रमा चासो नै हुँदैन भन्ने होइन, तर शहरी जनसंख्या प्राय: कृषिमा आश्रित हुँदैन । अथवा भनौं यो जनसंख्याले कृषि व्यवसायलाई नगण्य रुपमा मात्रै अपनाएको हुन्छ । यसैगरी ग्रामीण क्षेत्रमा राष्ट्रिय नीति-नियम वा परराष्ट्र नीतिका बारेमा कुरा गर्नु त्यति उपयुक्त हुँदैन किनकि ग्रामीण समुदायले प्रत्यक्ष रुपमा नीति-निर्माणमा कुनै भूमिका निर्वाह गर्दैन । यो योजनाविद्हरूको काम हो, जसले ग्रामीण समुदायको समस्याको बारेमा अध्ययन गर्छन् । शहरी क्षेत्रका सामुदायिक रेडियोले नीति निर्माणको तहमा बसेकाहरूलाई लक्ष्य गरी कार्यक्रम बनाएमा त्यो प्रभावकारी हुनसक्छ ।

## सञ्चारकर्मीको भूमिका

सामान्यतया सामुदायिक रेडियो सञ्चालन गर्ने व्यक्तिहरूले आफ्नो दायित्वलाई इमानदारीपूर्वक बहन गरेको प्रशस्त उदाहरण पाइन्छ । तैपनि आन्तरिक व्यवस्थापनमा देखिन जाने कमी-कमजोरी बाह्य क्षेत्रबाट आउने दबाव तथा बिनासित्तीमा देखाइने अर्घेल्याइँका कारण नेपालका सामुदायिक रेडियोले अपेक्षित सफलता हासिल गर्नमा बाधा अड्चनको सामना गर्नुपरिरहेको अवस्था विद्यमान छ । कुनै पनि सामुदायिक रेडियो सशक्त बनाउनमा सञ्चारकर्मीहरूको भूमिका नै पहिलो महत्त्वपूर्ण शर्त हो । सञ्चारकर्मीहरू जति प्रशिक्षित, लगनशील र विषयप्रति संवेदनशील हुन्छन् , सामुदायिक रेडियोले प्रसार गर्ने सामग्री त्यति नै सशक्त, मनोरञ्जक र श्रोताको रुचिअनुसारको बन्न जान्छ । सामुदायिक रेडियोमा संलग्न सञ्चारकर्मीहरू नीति निर्माणका पूर्वाधारलाई बुझ्ने तथा नीति निर्माणमा सघाउ पुऱ्याउन सक्ने, अध्ययनशील व्यक्ति हुनुपर्छ । प्रश्न आउन सक्छ, नेपालजस्तो मुलुकमा यस्ता सञ्चारकर्मी कहाँ पाउने ? यसको जवाफ सरल छ, आफूलाई चाहिने किसिमको जनशक्ति उत्पादन गर्ने काममा बेलैदेखि सोच्नुपर्छ । यसवर्ष हामीले यतिवटा सामुदायिक रेडियो स्थापना गऱ्यौं, भनेर प्रतिवेदन लेखेर दाताहरूबाट पुरस्कार थाप्न होड गर्नुको साटो समाजका सम्पूर्ण पक्षलाई समेटेर लान सक्ने एउटा सामुदायिक रेडियो स्थापना गरी त्यसका लागि उपयुक्त जनशक्ति उत्पादन गराउनु वा उपयुक्त जनशक्तिबाट त्यस्ता सामुदायिक रेडियो सञ्चालन गराउनु उचित ठहरिन्छ । सञ्चारकर्मीले ध्यान पुऱ्याउनुपर्ने अर्को महत्त्वपूर्ण पक्ष हो, समय-सापेक्ष तथा व्यावहारिक योजना तथा रणनीतिहरू विकास गरेर तिनको कार्यान्वयन गर्नु । सामुदायिक रेडियो स्थापना गर्न जति सजिलो छ यसलाई समाजमा स्थापित गर्न र लक्षित जनसमुदायको मन जित्न उतिनै कठिन छ । त्यसैले सञ्चारकर्मीले गम्भीरतापूर्वक अध्ययन गरी त्यसअनुसारको कार्यक्रम उत्पादन गर्ने रणनीति तय गर्नुपर्छ । सामुदायिक रेडियोले सामाजिक परिवर्तनको लक्ष्य राख्ने हुनाले यसको प्रभाव तत्कालै नदेखिने हुन्छ । त्यसैले रणनीतिक रुपमा कार्यक्रमहरू

निर्माण गर्नु उपयुक्त हुन्छ । यी रणनीतिहरूको निर्माण तथा कार्यान्वयनका लागि सञ्चारकर्मीहरूले सरकारी तथा गैरसरकारी संगठनहरू तथा आमसञ्चारका अन्य माध्यमहरूसँग उपयुक्त तालमेल राखेर उनीहरूसँग सहयोग जुटाउने प्रयास गर्नुपर्दछ । यति गरिसकेपछि सञ्चारकर्मीले गर्नुपर्ने अर्को महत्त्वपूर्ण कार्य हो सशक्त र नयाँपनसहितको कार्यक्रम सामग्री विकास र उत्पादन गर्नु । त्यो कार्यक्रमको लक्षित श्रोता, समूह र समयको निर्धारण गर्नु ।

कार्यक्रम उत्पादनका लागि सञ्चारकर्मीलाई विविध विधामा विशेषज्ञहरूको आवश्यकता पर्दछ । रेडियो कार्यक्रमका लागि तिनीहरूसँगको सम्पर्क र अन्तर्क्रिया लाभदायी हुन्छन् । कार्यक्रम उत्पादन र प्रसारण भइसकेपछि सञ्चारकर्मीमा अर्को दायित्व थपिन जान्छ । कार्यक्रमले लक्षित जनसमुदायमा कस्तो प्रभाव पारेको छ, सुधारका लागि कस्ता आवाजहरू सुनिन्छन् भन्ने कुराको नियमित अनुगमन गरी त्यसअनुरुप सुधारका कार्यको चाँजो मिलाउनुपर्ने दायित्व पनि सञ्चारकर्मीको हो ।

यसबाहेक सञ्चारकर्मीले आफू कार्यरत सामुदायिक रेडियोलाई, सामुदायिक संगठन तथा सरकारी र गैरसरकारी निकायहरूका लागि स्रोत केन्द्रको रुपमा विकसित गर्ने प्रयास गर्नुपर्दछ ।

## चुनौतीहरू

- सामुदायिक रेडियोमा संलग्न सञ्चारकर्मीहरू जो योजनाको विकास र योजनाको कार्यान्वयनमा लागेका हुन्छन् । तिनले एकपछि अर्को चुनौतीहरूको सामना गर्नुपरिरहेको हुन्छ । तीमध्ये केही समस्या निम्नलिखित हुन सक्छन् ।

- समाजमा रहेका व्यक्तिहरूको ज्ञान, दृष्टिकोण तथा व्यवहारमा परिवर्तन ल्याउनका लागि पर्ने समस्या । सामान्यतया समाजमा परम्परागत कुराहरूलाई बढी ध्यान दिने बानी परिसकेको हुन्छ । परम्परागत कुराहरू जतिसुकै जटिल र अप्ठ्यारो अथवा व्यक्तिसंगत

नभए पनि पुस्तौंदेखि त्यसैमा अभ्यस्त व्यक्तिलाई कुनै नयाँ र नौलो सोचतर्फ अकर्षित गर्नु निकै कठिन कुरा हुनजान्छ ।

- कुनै पनि नयाँ कार्य वा विषयमा जनसहभागिता जुटाई त्यसलाई व्यवस्थित गर्न एकातिर कठिन भइरहेको हुन्छ भने अर्कोतिर त्यसमा अन्य सरकारी तथा गैरसरकारीलगायत स्वयंसेवी संगठनहरू, सामुदायिक संगठन, व्यावसायिक तथा अनौपचारिक संगठनहरूलाई सामुदायिक रेडियोको मञ्चमा कुनै बाधा व्यवधानबिना ल्याउनु अर्को चुनौती हो । यसमा सफलता पाउनका लागि सञ्चारकर्मीले ठूलै कसरत गर्नुपर्ने हुन्छ ।

- आधुनिक युगमा भू-उपग्रह सञ्चारको विकास भइसकेको अवस्थामा स्थानीय स्रोत साधनका भरमा चलेका सामुदायिक रेडियोलाई तिनीहरूसँगको प्रतिस्पर्धामा कसरी लैजाने अथवा विभिन्न मुलुकबाट सञ्चार क्षेत्रमा भइरहेको अतिक्रमण कसरी रोक्ने भन्नेतर्फ पनि सञ्चारकर्मी सचेत हुनुपर्छ भन्ने मात्र नभएर सञ्चारकर्मीले ती माध्यमबाट आउने सकारात्मक कुराहरूलाई आफ्नो लक्षित समूहको हितका लागि उपयोगमा ल्याउन पनि सक्नुपर्छ ।

- शहरी क्षेत्रमा कार्य गर्ने सामुदायिक रेडियोका सञ्चारकर्मीले जहिले पनि जनशक्तिको विकासलाई ध्यानमा राख्नुपर्छ । र तिनीहरूलाई ग्रामीण क्षेत्रमा कार्य गर्न प्रोत्साहित गर्नुपर्छ । ताकि शहर र गाउँबीच चेतनाको स्तरमा रहेको खाडल क्रमशः भरिँदै जाओस् ।

- सामुदायिक रेडियोका सञ्चारकर्मीहरूको लक्षित समुदाय भनेको समाजको पिछडिएको वर्ग नै हो, चाहे त्यो निरक्षर जनसमुदाय होस् अथवा बुझ पचाउने, योजना निर्माण गर्दा लापरबाही गर्ने

योजनाविद्हरू हुन् । यस्ता योजनाविद्हरूलाई पढेका निरक्षर भन्नु अत्युक्ति हुँदैन । तर यस्ता विज्ञहरूसँग कार्य गर्दा सञ्चारकर्मीले उनीहरूको संवेदनशीलतालाई ध्यानमा राख्नु जरुरी हुन्छ ।

- सञ्चारकर्मीका लागि पर्ने अर्को ठूलो चुनौती हो, सामाजिक, सांस्कृतिक, व्यावहारिक र विकासमुखी कार्यक्रमका लागि गरिने अनुसन्धान र विश्लेषणहरूको अनुगमन गर्नु ।

- शहरी क्षेत्रमा स्थापित सामुदायिक रेडियोका सञ्चारकर्मीहरूका लागि पर्ने चुनौतीहरूमा निश्चित स्वार्थपूर्ति गर्न सञ्चारकै खोल ओढेर बस्ने व्यक्ति वा संस्था पर्दछन् । जसले सामुदायिक रेडियोका कार्यक्रमहरूमै भाँजो हाल्ने सरकारी तथा गैरसरकारी निकायहरूमा अनर्गल प्रचार गरिदिने, सामुदायिक रेडियोका कार्यक्रम तथा जनशक्तिलाई अन्यत्र मोडिदिने जस्ता कार्य गर्न सक्दछन् । यस्ता व्यक्ति वा समूहको पहिचान गरी तिनको स्वार्थसिद्धिको साधन बन्नबाट जोगिनु पनि सामुदायिक रेडियोका सञ्चारकर्मीहरूका लागि चुनौती हो ।



# सामाजिक परिवर्तनका लागि सामुदायिक रेडियोको भूमिका

विकासका मुद्दाहरूलाई सरल र जानकारीमूलक बनाउनका लागि अति आवश्यक तत्त्वहरू भनेका सूचना, शिक्षा र सञ्चार हुन् । यी तीन तत्त्वको एकीकृत सहकार्य सामाजिक परिवर्तनका लागि अति महत्त्वपूर्ण र आवश्यक छ । सरकारी, गैरसरकारी तथा सामुदायिक संस्थाहरूका विषयमा चेतना अभिवृद्धि गर्ने काममा सूचना प्रविधिले प्राविधिक तथा तथ्याङ्कीय सूचनाहरूको प्रचार-प्रसारको भूमिको बहन गर्छ ।

रेडियो कार्यक्रमहरूमा समाजको चेतना अभिवृद्धिका लागि विषयहरूको उठान गरिएपछि ढिलो-चाँडो यसले श्रोताहरूको ध्यान ती विषयहरूतर्फ केन्द्रित गर्न सुरु गर्छ । लामो समयसम्म सूचनाको हकबाट ओझेलमा पारिएको नेपालजस्तो मुलुकका लागि सूचना प्राप्त गर्ने संयन्त्रको विकास भएपछि त्यसको प्रभावकारी उपयोगको मार्ग प्रशस्त गर्न सामुदायिक स्तरमा अथवा सामाजिक स्तरमा प्रयासहरू भएका छन् । यसको जल्दोबल्दो उदाहरण देशका विभिन्न भागमा खुलेका सामुदायिक रेडियोहरू हुन् ।

विकासका मुद्दाहरूलाई समाजमा फैलाउनका लागि आवश्यक अर्को महत्त्वपूर्ण तत्त्व हो शिक्षा । शिक्षा र सञ्चार एक-अर्काका पूरक हुन् भन्दा त्यति फरक पर्दैन । किनकि शिक्षालाई प्रभावकारी रुपमा लक्षित समुदायसम्म पुऱ्याउन सञ्चार नै एकमात्र विश्वासिलो र भरपर्दो माध्यम हो । शिक्षाद्वारा कुनै व्यक्ति वा समाजलाई परिवर्तन गर्न अपेक्षाकृत लामो समय लाग्न सक्छ । तर त्यही शिक्षालाई सञ्चारको माध्यमबाट प्रसार गरिएको खण्डमा त्यसको प्रभाव छिटो, सरल र सहज रुपमा पर्दछ । शिक्षाको मूल उद्देश्य कुनै पनि समस्याको सही पहिचान र त्यसको सम्भाव्य समाधानका लागि उचित ज्ञान प्रदान गर्नु रहेको हुन्छ । उदाहरणका लागि शिक्षाले नागरिकलाई कुनै पनि समस्याको प्रकृति, त्यसका कारण तथा विकास प्रक्रियामा त्यसको असर आदिलाई सूक्ष्म रुपमा अध्ययन गरी त्यसको समाधानमा उसको दायित्वसमेतलाई बुझाउने काम गर्छ । यो शिक्षा औपचारिक शिक्षालयहरूबाट त प्राप्त गर्न सकिन्छ नै तर जुन ठाउँमा यस्ता औपचारिक शिक्षालय पुगेका छैनन् वा हुँदैनन् । त्यस्ता ठाउँमा स्थानीय स्तरमा स्थापित सामुदायिक रेडियोहरूले

अनौपचारिक रुपमा शिक्षालयको भूमिका निर्वाह गर्न सक्छन् ।

शिक्षापछि विकासको बाहकका रुपमा सञ्चारलाई लिनुपर्दछ । सञ्चारले विकाससँग सम्बन्धित मुद्दाहरूका बारेमा ज्ञान हासिल गर्न, आफ्ना दृष्टिकोणहरूमा परिवर्तन ल्याउन तथा आफ्नो दैनदिनीमा स्वभाविक सुधार ल्याउनका लागि नागरिकलाई प्रेरित गर्दछ । सञ्चारको स्वरुप नै प्राय: दोहोरो हुने गर्छ । कुनै सामुदायिक रेडियोलाई सञ्चारको मूलस्रोतका रुपमा लिने हो भने त्यसबाट प्रसार हुने सामग्रीले समाजमा चेतना तथा शिक्षाको बिगुल फुक्ला, तर त्यो शिक्षा कति ग्राह्य भयो भन्ने कुराको संकेत लक्षित समुदायबाट रेडियोलाई प्राप्त हुने श्रोता प्रतिक्रियाबाट सहजै मिल्दछ । जसबाट समाजले कस्तो प्रकारको सञ्चार अथवा सूचना सहजै ग्रहण गर्न सक्छ वा चाहन्छ भन्ने कुरा निक्यौंल गर्न सहयोग पुऱ्याउँछ । सञ्चारको दूरगामी प्रभावकै विषयमा चर्चा गर्दा सामुदायिक रेडियो र श्रोता वा समाजबीचको अन्तर्क्रिया नीति-निर्माताहरूका लागि मार्गदर्शक बन्न सक्छ । तर सामाजिक समस्याहरूप्रति नीति निर्माणको तहमा बस्नेहरूको संवेदनशीलताले समाज र सञ्चारबीचको अन्तर्क्रियाबाट प्राप्त सुझाव वा संकेतको ग्रहणशीलतालाई निर्देशित गर्दछ । त्यसैले सूचना, शिक्षा र सञ्चारको प्रभाव समाजमा जतिसुकै परे पनि नीति निर्माणका तहमा बस्नेहरू सामाजिक समस्याहरूप्रति संवेदनाविहीन बनिदिएका खण्डमा त्यसको असर देखिन लामै समय लाग्न जाने हुन्छ ।

## सामुदायिक रेडियो नै किन ?

कुनै पनि समाजको सामाजिक, आर्थिक विकाससम्बन्धी नीति तथा कार्यक्रमको विस्तृतीकरणका लागि आमसञ्चारलगायत स्थानीय सञ्चारका साधनहरूको आवश्यकता पर्दछ । यी साधनहरूमा अन्तर समुदाय संवाद, अन्तर व्यक्तीय संवाद र सामाजिक व्यवस्थापनका परम्परागत उपायहरू पर्दछन् । यी सबैको साझा र एकीकृत रुपको सञ्चार प्रणालीका दृष्टिकोणले सामुदायिक रेडियो भरपर्दो र विश्वासिलो

माध्यम हुन सक्दछ । सामुदायिक रेडियोका उद्देश्य तथा उद्देश्य प्राप्तिका लागि अपनाइने उपायहरूका बारेमा अब चर्चा गरौं :

(क) सामुदायिक रेडियोको पहिलो उद्देश्य भन्नु नै लक्षित श्रोता समुदायका समस्याहरूको पहिचान गर्नु हो । समस्या पहिचानका लागि गर्नुपर्ने अनुसन्धानका लागि पाँचदेखि दस जना श्रोता भेला गरेर सामूहिक छलफल आयोजना गर्न सकिन्छ ।

(ख) विकासका मुद्दाहरूका विषयमा समझदारी कायम गराउन सामुदायिक रेडियोले अहम् भूमिका खेल्नसक्छ । विकासका मुद्दाहरूका विषयमा सामुदायिक रेडियोद्वारा गराइने बहस तथा छलफलले समस्या निराकरणका लागि मार्ग प्रशस्त गर्नुका साथै समाजमा विद्यमान सञ्चारका अन्य उपायहरूको परिचालन गर्न मद्दत पुऱ्याउँछ ।

(ग) समाजमै उत्पन्न मौलिक अवधारणाहरूको विषयमा जानकारी दिलाउँछ ।

(घ) विकासका मुद्दाहरूमा विशेषज्ञहरूको विचार र श्रोताको बुझाईका बीचमा रहेको खाडल पुर्न/सम्याउन भूमिका खेल्ने मुख्य माध्यम सामुदायिक रेडियो बन्न सक्छ ।

(ङ) नीति-निर्माता, सामाजिक कार्यकर्तालगायत अन्य जागरुक समुदायलाई समस्याहरूको पहिचान गरी तिनको निराकरणका लागि भूमिका निर्वाह गर्न उत्प्रेरित गराउँछ ।

(च) सामुदायिक रेडियोले समाजमा स्वाभाविक परिवर्तन (जस्तो आचार, विचार र व्यवहारमा) का लागि भूमिका खेल्दछ ।

(छ) समाजमा रहेका परम्परागत तर पिछडिएका वर्गको व्यवहारहरूमा परिवर्तन गराउन सक्छ । जुन समुदायलाई उत्प्रेरित गर्दा सञ्चारमाध्यमका रुपमा सामुदायिक रेडियो स्थापित हुनसक्दछ ।

(ज) समाजमा स्वस्थ वैचारिक आदान-प्रदानका लागि जागरुकता बढाउन सामुदायिक रेडियो प्रभावकारी हुनसक्छ ।

(झ) विकास तथा सामाजिक परिवर्तनका कुनै पनि योजना तथा कार्यक्रमको

कार्यान्वयनका लागि लक्षित समुदायमा विचारको संवाहकका रुपमा सामुदायिक रेडियोले सशक्त भूमिका खेल्न सक्छ ।

(ञ) सामाजिक व्यवस्थापनमा सुधार ल्याउन सक्छ ।

(ट) प्रसारकहरू तथा व्यवस्थापकहरूको सोचाइमा सुधार ल्याउन सक्छ ।

ठ) तालिम तथा गोष्ठीमा सहयोग पुऱ्याउन सक्छ ।

(ड) कुनै पनि नयाँ कार्यक्रमको परिकल्पना तथा व्यवस्थापनमा सुधार ल्याउन सहयोग पुऱ्याउँछ ।

माथि उल्लिखित बुँदाहरू समाजका कुनै पनि कार्यक्रम तथा योजनाहरूमा जनसहभागिता बढाउन तथा जनधारणा प्रतिविम्बित गर्न, समुदाय तथा सेवासँग सम्बद्ध निकायबीच अन्तरसंवाद गराउन साथै समुदायका दृष्टिकोणहरू नीति-निर्मातासम्म पुऱ्याउनका लागि महत्त्वपूर्ण छन् । सामुदायिक रेडियोले सधैं ध्यानमा राख्नुपर्ने कुरा हो, प्रसार सामग्री र श्रोता । किनकि नीति निर्माणका तहबाट आएका दृष्टिकोण तथा योजनाहरूको सफल कार्यान्वयनका लागि उत्प्रेरकको भूमिका पनि अन्त्यमा सामुदायिक रेडियोले नै खेल्नुपर्ने हुन्छ ।

## परम्परागत तथा स्थानीय स्रोतको परिचालन

नेपालजस्तो विकासोन्मुख मुलुकमा परम्परागत रुपमा चलिआएका सञ्चारका विविध उपायहरूको उपयोग नगरीकन सञ्चारसम्बन्धी कुनै पनि रणनीति सफल हुन कठिनाई पर्दछ । नेपालमा सञ्चारका अत्याधुनिक प्रविधिको आगमन भइसकेको अवस्थामा परम्परागत प्रविधिको उपयोगलाई समेत साथसाथै लैजाने हो भने यसको प्रभाव जनमानसमा अति सूक्ष्म रुपमा पर्ने निश्चित छ । सञ्चारको परम्परागत प्रविधि वा उपायको उद्गम समाज नै भएकाले समाजले यसलाई अति छिटो ग्रहण गर्दछ । नेपालको परिप्रेक्ष्यमा लोकभाकामा गीत, भजन, प्रदर्शनलगायत यावत् सूचनामूलक तथा मनोरञ्जनात्मक कार्यक्रम सूचना सञ्चारका परम्परागत उपायको कोटिमा पर्दछन् । यी उपायहरूलाई आधुनिक प्रविधिसँग

सामन्जस्य गराई समाजमा आवश्यक परिवर्तनको कार्यमा प्रयोग गर्न सकिन्छ । यो कार्यमा सामुदायिक रेडियोको भूमिका अग्रणी रहनुपर्दछ ।

## आचारगत विषयहरूमा परिवर्तनका लागि सामुदायिक रेडियोको भूमिका

लोक सञ्चारका उपायहरू मनोरञ्जन तथा सूचनाको आदान-प्रदानका मौलिक धरोहर हुन् । आपसी छलफल तथा प्रविधिको माध्यमबाट गरिने सूचना तथा मनोरञ्जनको आदान-प्रदानले सामाजिक आचरणमा परिवर्तन ल्याउन ठूलो र महत्त्वपूर्ण भूमिका खेल्ने गर्दछ । कला, संस्कृति तथा सूचना आदान-प्रदान गर्न सहयोगी सञ्चार प्रविधि समाजकै अभिन्न अङ्ग भएकाले विकाससम्बन्धी विषयहरूलाई समाजको रुचिअनुसार र ग्राह्य रुपमा सम्प्रेषण गर्नमा लोक सञ्चारका उपाय वा प्रविधि प्रभावकारी हुन्छन् । लक्षित समुदायमा सोझो प्रभाव पर्ने हुनाले सञ्चारका यी उपायहरू यतिसम्म प्रभावकारी बन्न सक्छन् कि श्रोताबीचमा सञ्चारको संजाल स्थापना गरिरहनुपर्ने लम्बे झन्झटबाट समेत मुक्त बन्न सञ्चारकर्मीहरूलाई मद्दत पुऱ्याउँछ । लोक सञ्चारका विविध उपायहरू स्थानीय स्तरका अभिव्यक्तिकै उपज र दैनिक जनजीवनका मूल्य, मान्यता तथा सूचनामा आधारित हुने हुनाले यिनलाई विकासका मुद्दाहरूमा सहज उपयोग गर्न सकिन्छ । सञ्चारका परम्परागत उपायहरूको अर्को महत्त्वपूर्ण विशेषता नै भनौं सार्वजनिक सम्मेलन, सभा इत्यादिमा विकासका कुराप्रति त्यति चासो नदिने वा जाँदै नजाने किसिमका व्यक्तिहरूलाई समेत सञ्चारका यी उपायहरूले समेटेका हुन्छन् । यसतर्फ ती व्यक्तिहरूको चासो जगाइराखेका हुन्छन् । यो विशेषतालाई उपयोग गरी परम्परागत शैलीका सूचनाहरूमा नौलोपन थप्दै विषयगत परिमार्जन गरी विकासका कुराहरू लक्षित समूहसम्म राखेर सामाजिक परिवर्तनको दिशामा समाजको आचरणगत परिवर्तन सुनिश्चित गर्न सकिन्छ । यसबाहेक प्रसार गरिने वा ती माध्यमका लागि उत्पादन गरिने कार्यक्रम जो स्वाभाविक रुपमा विविध श्रोताप्रति लक्षित

हुन्छन् । तर सामुदायिक रेडियोमार्फत प्रसारण गरिने कार्यक्रम लक्षित वर्गका आवश्यकतालाई ध्यानमा राखेर सञ्चारका परम्परागत उपायलाई अवलम्बन गर्दै बनाइने हुनाले त्यस्ता कार्यक्रमको प्रभाव तत्काल पर्ने हुन्छ । त्यसमाथि स्थानीय भाषा-भाषीलाई लक्षित गरी उनीहरूकै मातृभाषामा कार्यक्रम बनाइने हो भने यसको असर झन् प्रभावकारी बन्न सक्दछ । तर सधैं ख्याल राख्नुपर्ने कुरा के हो भने यस्ता परम्परागत उपायहरूको प्रयोग प्रोपोगण्डा फैलाउने विषयहरूमा गर्नुहुँदैन । त्यसको असर झन् उल्टो पर्न सक्छ । सञ्चार परम्परागत माध्यमहरूलाई उपयोगमा ल्याएर बनाइने सञ्चारको रणनीति समाजलाई सुपाच्य ढङ्गले कार्यान्वयन गर्नका लागि सामुदायिक रेडियोमा कार्यरत सञ्चारकर्मीले लक्षित समाज र त्यहाँ विद्यमान सञ्चारका परम्परागत स्वरुपहरूको अध्ययन गर्नु जरुरी हुन्छ । सञ्चारका परम्परागत माध्यमहरूले संस्कृतिको निर्माणमा जुन भूमिका खेलेका हुन्छन्, समाजमा विद्यमान मूल्य, मान्यता र दृष्टिकोणहरू बुझेर त्यसबमोजिमका सूचना वा जानकारी प्रवाह गर्नु/गराउनुमा सामुदायिक रेडियोको अहम् भूमिका हुन्छ ।

स्थानीय स्तरमा जनताको माझमा रहने हुनाले सामुदायिक रेडियोहरू स्थानीय, क्षेत्रीय तथा राष्ट्रिय स्तरमा निर्धारित योजनाहरूको कार्यान्वयनका लागि उपयोगी सिद्ध हुन सक्छन् । सामुदायिक रेडियोहरूले आमसञ्चारका अन्य माध्यम तथा प्रविधिको पहुँच पुगिनसकेका वा त्यस्ता प्रविधि ग्रहण गर्न अक्षम समुदायमा समेत आफूलाई स्थापित गर्नसक्ने हुनाले स्थानीय, क्षेत्रीय तथा राष्ट्रिय स्तरमा विकासका मुद्दाहरूलाई अधिकतम रुपमा प्रचार-प्रसार गरेर सामाजिक परिवर्तन ल्याउन अग्रणी भूमिका खेल्न सक्छन् । लोक सञ्चारका माध्यमहरूले स्थानीय स्तरमा ठूलो क्षेत्रफलका समुदाय विशेषलाई लक्षित समुदायका रुपमा समेट्न सक्दछन् । साथै यी माध्यमहरू ग्रामीण समुदायका लागि ग्राह्य पनि हुन्छन् । यसबाहेक लोक सञ्चारका माध्यमहरूले सर्वसाधारणका मूल्य, मान्यता, संस्कृति प्रतिविम्बित गर्ने हुनाले तिनले समाजमा सहज रुपमा प्रभाव पार्ने गर्छन् जुन सामुदायिक रेडियोका लागि अपरिहार्य पाटो बन्न सक्छ । लोक

सञ्चारले आफूलाई समाजमा सहजै स्थापित गर्न सक्ने र सामुदायिक रेडियो आमसञ्चारको माध्यम भएकाले यी दुई बीचको तादात्म्यले विकास सञ्चारलाई सरल बनाउन मद्दत पुग्ने कुरामा दुईमत हुन सक्दैन । ग्रामीण समुदायले लोक सञ्चारका माध्यमलाई बढी ग्राह्यता दिने भएकाले यस्ता माध्यमबाट प्रसार हुने सामग्रीले आफ्नो विश्वसनीयतालाई स्थापित गर्दछन् । सामुदायिक रेडियोले लोक सञ्चारका माध्यमलाई प्राथमिकता दिँदा जनमानसमा रेडियोप्रति उत्पन्न हुन सक्ने उदासीनतालाई सन्तुलनमा ल्याउन सहयोग पुग्दछ । जसले अन्ततोगत्वा समाजमा आचरणगत परिवर्तन ल्याउन गहन भूमिका खेल्ने गर्दछ । यति धेरै फाइदा हुँदाहुँदै पनि लोक सञ्चारका माध्यमहरूको उपयोगमा अति सूक्ष्म रुपमा ध्यान पुर्‍याउनुपर्ने हुन्छ । यी माध्यमसँग आमनागरिकका मूल्य, मान्यता, दृष्टिकोण, सोचाइ, बुझाइ, जीवन-दर्शन, रहन-सहन तथा सोचाइको प्रक्रिया आदि गाँसिएका हुनाले यिनको प्रयोगमा अनावश्यक बल मिच्याई गर्नु घातक हुनसक्छ । सही तरिकाले यिनको प्रयोग गर्न सकेको खण्डमा कुनै पनि सूचना तथा जानकारी प्रवाह गर्ने काममा लोक सञ्चारका माध्यमले अचुक अस्त्रको काम गर्न सक्छन् भने यिनको गलत प्रयोग भएको खण्डमा ठीक उल्टो असर पर्न जान्छ । फलस्वरुप सञ्चारको एउटा भरपर्दो प्रक्रिया नै अवरुद्ध हुन सक्छ । उदाहरणका लागि लोक सञ्चारका माध्यमलाई राजनीतिक प्रोपोगण्डाको अस्त्र बनाउने प्रयास जसको उदाहरण नेपालमा २०४६ सालको राजनीतिक परिवर्तनपछि बग्रेल्ती पाइन्छन् । यी प्रयासहरूले लोक सञ्चारका माध्यमहरूप्रति वितृष्णा फैलाउनमा भूमिका खेलेका छन् । सामुदायिक रेडियोसँग सम्बद्ध सञ्चारकर्मीले यो संवेदनशील पक्षलाई ध्यानमा राखेर आधुनिक सञ्चार प्रविधिलाई समयसापेक्ष बनाउँदै लैजान प्रयास गर्नुपर्दछ ।

समाजअनुसार सामुदायिक रेडियोको लक्षित श्रोता फरक-फरक हुने गर्दछन् । नेपाल जस्तो गाउँ नै गाउँले भरिएको मुलुकमा खुलेका सामुदायिक रेडियोले सामाजिक परिवर्तनका लागि लोक सञ्चारका माध्यमको प्रयोग गर्दा निम्न कुराहरूमा ध्यान पुर्‍याउन जरुरी हुन्छ :

(क) लोक सञ्चारका माध्यमहरू ग्रामीण विकासका अभिन्न अङ्ग भएकाले जहाँ सम्भव हुन्छ, त्यहाँ तिनको प्रयोग आमसञ्चारका माध्यमहरूमा गरिनुपर्दछ ।

(ख) सामुदायिक रेडियोले लोक सञ्चारका माध्यम प्रयोग गर्दा आफ्ना श्रोताहरूको बुझाइलाई ध्यानमा राख्नुपर्दछ । ग्रामीण श्रोताका लागि मनोरञ्जक साथै ज्ञानबर्द्धक कार्यक्रमहरू लोक सञ्चारको भाकामा प्रसार गरी उनीहरूलाई विकासका कार्यक्रमहरूप्रति आकर्षित गर्नुपर्दछ ।

(ग) यस्ता कार्यक्रमहरू प्रसार गर्दा सामाजिक-आर्थिक विकासतर्फ मात्र लक्षित नगरी सांस्कृतिक विकासलाई समेत ध्यानमा राख्नुपर्दछ ।

(घ) लोक सञ्चारका माध्यमहरूले समाजमा भइरहेका परिवर्तनहरूको प्रतिनिधित्व गर्ने हुनाले तिनले सामाजिक विश्वसनीयता हासिल गरेका हुन्छन् । सामुदायिक रेडियोका प्रसारकहरूले यसको हेक्का राख्नुपर्दछ ।

(ङ) लोक सञ्चारका प्रत्येक माध्यमको प्रयोग सामाजिक, आर्थिक विकासमा गर्नु सम्भव हुँदैन । त्यसकारण प्रत्येक माध्यमको गहन अध्ययनपछि मात्र उत्पादन प्रसारण गरिने सामग्रीअनुरुपको माध्यम छनौट गर्नुपर्दछ । यसका साथै लोक सञ्चारका माध्यमहरूको उद्‌गम बिन्दु समाज नै हुने भएकाले यिनको प्रयोग स्थानीय घटनाक्रम र स्थानीय सञ्चार प्रक्रियामा तिनको भूमिका बीचमा तालमेल मिलाउनुपर्दछ ।

(च) यसरी तालमेल मिलाउँदा लोक सञ्चारका माध्यमहरूको मौलिकतामा खलल पुर्‍याउनु हुँदैन ।

(छ) सामुदायिक स्तरमा सञ्चार रणनीति बनाउँदा लोक कलाकार तथा सञ्चारकर्मीहरूबीच गहन छलफल तथा सहयोग हुन जरुरी हुन्छ ।

व्यापारिक प्रतिष्ठानहरूले आफ्नो उत्पादनको बजार व्यवस्थापन गर्ने सिलसिलामा लागि विभिन्न उपाय अपनाएर आफ्ना उत्पादनप्रतिको

जनधारणा बुझेर त्यसैअनुरुप उत्पादनको गुणस्तरमा सुधार ल्याएजस्तै सामाजिक तथा विकासमुखी सञ्चारमाध्यमले आफ्ना प्रसारणका बारेमा श्रोताको प्रतिक्रिया बुझ्ने गर्नुपर्दछ । सामुदायिक रेडियोले आफ्ना लक्षित श्रोताको रुचिलाई ध्यानमा राखेर त्यसै शैलीको कार्यक्रमको उत्पादन पछि कार्यक्रमको प्रभावलाई विस्तार र स्थापित गर्न तथा त्यसको प्रचार-प्रसार गर्न जनसम्पर्कमा ध्यान दिनुपर्दछ । यस्ता क्रियाकलापले समाजको सोचाइमा सकारात्मक परिवर्तन ल्याउँछ । आधुनिक सञ्चारको व्यापक विकास भइसकेको अवस्थामा प्रविधिको हिसाबले नेपालमा सामुदायिक रेडियोहरूलाई व्यापारिक रेडियोले उछिनिसकेका छन् । र दुवैको लक्षित श्रोता करिब-करिब एकै छन् । सामाजिक सूचना तथा कार्यक्रमहरूलाई व्यापारिक विज्ञापनहरूले उछिन्दै गइरहेको अवस्थामा सामुदायिक रेडियोले श्रोतालाई आकर्षित गर्न सकारात्मक र प्रभावकारी प्रयास गर्नु आवश्यक हुन आउँछ ।

यस्तो अवस्थामा सामुदायिक रेडियोहरूले श्रोताका आवश्यकता तथा उनीहरूको बुझाइमा केन्द्रित भएर कार्यक्रम सञ्चालन गर्ने तथा सञ्चारका क्षेत्रमा आएका नौला अवधारणालाई ग्रहण गर्दै समाजबाट आइरहेका परिवर्तनका आवाजहरूलाई लचिलो रुपमा ग्रहण गर्ने उपाय अवलम्बन गर्नुपर्दछ । यसो गर्नाले रेडियोबाट प्रसारित कार्यक्रमको मूल्यांकन हुनुका साथै श्रोताको रुचिअनुसारको कार्यक्रम उत्पादन गर्न सघाउ पुग्दछ । सामुदायिक रेडियोसँग सम्बद्ध सञ्चारकर्मीहरूले सामाजिक परिवर्तनका लागि व्यवस्थापनको अवधारणा बुझ्नुपर्ने मुख्य कारण निम्नलिखित छन्:

(क) यसले श्रोता र रेडियो स्टेसनबीच संवाद आदान-प्रदान गराउने हुनाले नीति निर्माणमा सघाउ पुग्नुका साथै सूचना प्रवाह गर्ने कार्यमा सुधार आउँछ ।

(ख) यसले सामाजिक परिवर्तनका कार्यक्रमहरूमा परिवर्तन गर्न सघाउनुका साथै लक्षित समुदायको आवश्यकता र दृष्टिकोणलाई मुखरित गर्छ ।

(ग) बजार व्यवस्थापनको बुझाइले सञ्चारकर्मीलाई समाजको रोजाई बुझ्न सघाउँछ र जसले गर्दा सञ्चारकर्मीले समाजप्रतिको जिम्मेवारीलाई आत्मसात गर्न पाउँछ ।

(घ) सञ्चारकर्मीले आफ्नो जिम्मेवारी महसुस गरेपछि रेडियोबाट प्रसार हुने सूचनाहरू पनि आधिकारिक हुने गर्छन् ।

(ङ) यसले सामाजिक परिवर्तनसम्बन्धी अन्य कार्यक्रममा सुधार ल्याउन सहयोग गर्दछ ।

माथि उल्लिखित बुँदाहरूको मर्म त्यस बेलामात्र सार्थक र प्रभावकारी हुन्छ, जब सञ्चारकर्मी र श्रोताबीचको दूरी अति कम हुने गर्दछ । अन्यथा बजार व्यवस्थापनका मान्यता खेर जान्छ । नेपालका श्रोताहरूमा विकासका कार्यक्रमहरूप्रतिका रुचि त्यति सहज र उत्साहपूर्ण भइनसकेको अवस्थामा उनीहरूमा उत्सुकता जगाउने दायित्व पनि सञ्चारकर्मीहरूकै काँधमा रहेको छ ।

समाजमा यस्ता कुनै पनि क्षेत्र हुँदैनन्, जससँग सामुदायिक रेडियोको सम्बन्ध नगाँसिएको होस् । विकाससँग गाँसिएका समाजको प्रत्येक क्षेत्र- स्वास्थ्य, शिक्षा, कृषि, उद्योग, वाणिज्य, विज्ञान र प्रविधि, महिला र बालबालिका, वातावरण इत्यादि क्षेत्रका योजना तथा कार्यक्रमहरूको सफलताका लागि सामुदायिक रेडियोले प्रभावकारी भूमिका खेल्नुपर्ने हुन्छ । जुन सामुदायिक रेडियोका लागि चुनौतीपूर्ण नै हुन्छ । किनकि नीति-निर्माता, श्रोता र सञ्चार माध्यमबीचको सम्बन्ध र विभिन्न क्षेत्रका योजना/आयोजनाबीच उचित समन्वयको अभावमा जनशक्तिलगायतका थुप्रै कुराहरूमा ह्रास आउने तथा समय र स्रोतको अनावश्यक खपत बढ्न जाने समस्या आउन सक्दछ । सामुदायिक रेडियोले आफ्ना कार्यक्रमहरू छनौट गर्दा समाजका सामान्य समस्या र समष्टीगत विकास प्रक्रियामा अहम् भूमिका खेल्ने विषयलाई समावेश गर्नुपर्दछ । यी समस्याहरूको समाधानबाट नै समाजको आर्थिक, सामाजिक उन्नति निश्चित गर्न सकिन्छ । यिनै विषयहरूमा जोड दिने क्रममा सामुदायिक रेडियोले प्राथमिकतामा राख्नुपर्ने क्षेत्रका विषयमा तल चर्चा गरिन्छ ।

(क) **जनसंख्या र वातावरण** :- जनसंख्या र वातावरणबीच अन्योन्याश्रित सम्बन्ध छ । यी दुईबीच सन्तुलन कायम हुन सकेको खण्डमा हाम्रा गाउँ, बस्ती, शहर साथै सिङ्गै राष्ट्रको विकासका लागि कठै मेहनतको खाँचो पर्ने छैन । तापनि द्रुत जनसंख्या वृद्धि, द्रुत गतिको शहरीकरण, जनसंख्याको असमान फैलावट इत्यादिले जनसंख्या र वातावरणबीचको सन्तुलनमा ठाडै असर परिरहेको हुन्छ । यसबाहेक जनताको असमान आर्थिक अवस्था, उपभोगको स्तरमा रहेको अनियमितता साथै नयाँ ऊर्जा तथा मेसिनहरूको प्रयोगले ल्याउने वातावरणीय परिवर्तन आदिले वातावरणलाई आफ्नो पुरानो रुपमा फर्कन बाधा सिर्जना गर्दछन् । वर्तमान समयमा पनि जनचासो तथा जागरुकतामा कमी, जनताको अज्ञानता तथा उदासीनता र सामुदायिक भावनाको कमी आदि कारणले जनसंख्या र वातावरणबीचको सन्तुलन कायम गर्न कठिनाई पर्दै गएको छ । यी सम्पूर्ण समस्याहरूको निदानका लागि अपरिहार्य आवश्यकता

हो, “राजनीतिक प्रतिबद्धता” । यसबाहेक व्यक्ति र समाजबीचको आपसी समन्वय, सूचनाको आदान-प्रदान र शिक्षाको प्रसारले सरकार तथा राजनीतिक दलहरूद्वारा अघि सारिएका नीति तथा कार्यक्रम कार्यान्वयनका लागि सहयोगीको भूमिका खेल्न सक्छ । यो सहयोगीको भूमिकालाई प्रभावकारी बनाउन सामुदायिक रेडियोले महत्त्वपूर्ण भूमिका खेल्न सक्छ । यसैगरी जनसंख्याको विषय मानव समुदाय, तिनको हित तथा सुरक्षासँग सम्बन्धित छ । जनसंख्या र वातावरणबीचको संवेदनशील विषय भनेकै यी दुईबीचको सन्तुलन हो । उपलब्ध स्रोत, साधन र जनसंख्या वृद्धिबीच दिगो रुपमा सन्तुलन बनाई राख्नु योजनाविद्हरूका लागि चुनौती हो । उपलब्ध साधन र स्रोतलाई जनसंख्या वृद्धिले उछिनेपछि जनताको हित तथा उन्नतिको लक्ष्यमा बाधा उत्पन्न हुन्छ । यो विषयलाई प्राथमिकता दिइने हो भने जनसंख्या तथा वातावरणलगायतका मुद्दाहरू समुदायमा पुऱ्याउनु र समुदायले यसलाई ग्रहण गर्न सहज पार्न सक्दछ । जनसंख्या र वातावरण यस्ता विषय हुन्, जसले समाजको हरेक क्षेत्रलाई प्रभावित गरेको हुन्छन् । त्यसैले यी विषयसम्बन्धी नीति तथा योजनाहरू तर्जुमा गर्दा योजनाविद्हरूले जनसहभागिता र व्यक्ति, वर्ग, समाज आदिका प्रतिनिधित्व गर्ने संगठनहरूको दृष्टिकोण एवं अनुभवलाई ध्यान दिनु जरुरी हुन्छ । जनसंख्या र वातावरणबीचको सम्बन्ध परिपूरक हुने हुनाले यी दुवैलाई समाजको सांस्कृतिक तथा सामाजिक मूल्य मान्यताले प्रत्यक्ष वा परोक्षरुपमा सहयोग तथा नोक्सानी दुवै गरिरहेका हुन्छन् । समाजमा वातावरणले जनसंख्यालाई र जनसंख्याले वातावरणलाई प्रभावित गरिरहेको हुन्छ । सिङ्गो समाजकै सक्रिय सहभागिता जुटाएर वातावरण संरक्षण गर्नु अब एकमात्र विकल्प देखिएको छ । नेपालमा यसको अभ्यास पनि सुरु भइसकेको छ । समाजका न्यून आय वर्गका जनतासम्म वातावरण र यसको संरक्षणप्रति अभिरुचि जगाउन वन तथा वातावरणको क्षेत्रमा कार्य गर्ने निकायहरू धेरै हदसम्म सफल छन् । यसको सानो उदाहरण हो सामुदायिक वन । उजाडिएका नाङ्गा पाखाहरूमा हरियाली ल्याउन सामुदायिक वन कार्यक्रम निकै सफल छ । उपभोक्ताहरूले आफ्नो

सम्पत्तिको रुपमा वन तथा वातावरण संरक्षण गर्न सफलता पाउन थालेपछि नीति निर्माण तहमा रहेको टाउको दु:खाई कम भएको छ। अब आवश्यकता छ, बनिसकेको नीतिलाई निरन्तरता दिने। यस्ता कार्यक्रम अन्य क्षेत्रमा पनि बन्न सके जनसंख्या र वातावरणबीचको असन्तुलन कम गर्न मद्दत मिल्दछ। सामुदायिक रेडियोले आफ्ना कार्यक्रमहरूको निर्माण तथा प्रस्तुतिमा यस्ता विषयहरूलाई समावेश गर्न उच्च प्राथमिकता दिनु जरुरी हुन्छ।

## महिला र बालबालिका

महिला र बालबालिका समाजको अभिन्न पाटो हो। आजका बालबालिका भोलिका सवल नागरिक र नीति-निर्माता भएकाले बालबालिका सामुदायिक रेडियोका महत्त्वपूर्ण लक्षित समूह हुन्। सानैमा दिइएको ज्ञान पछिसम्मका लागि उपयोगी हुने भएकाले त्यसतर्फ ध्यान दिनु जरुरी हुन्छ। सामाजिक मूल्य, मान्यता, नैतिकता आदि शिक्षा दिने उपयुक्त उमेर निर्धारण गरी सामुदायिक रेडियोले  आफ्ना कार्यक्रमहरू बनाउनुपर्दछ। बालबालिकाका अधिकार, उनीहरूको शिक्षा, स्वास्थ्य, वातावरणप्रतिको जागरुकता, सामाजिक अवस्था आदि बाल कार्यक्रमका विषय हुन सक्दछन्। घर, बालबालिकाको पहिलो शिक्षालय र आमा प्रथम गुरुआमा भएकाले महिला शिक्षित हुनु जरुरी छ। विश्वको जनसंख्याको लगभग ५० प्रतिशत भाग महिलाले ओगटेका छन्।

नारी जननी भएकाले विकाससम्बन्धी र वातावरण नीतिहरूले महिला वर्गलाई प्रत्यक्ष असर पारेको हुन्छ। साथसाथै विकास र वातावरणसम्बन्धी नीतिको कार्यान्वयनमा महिलाको प्रत्यक्ष र परोक्ष दुवै भूमिका निर्णायक हुने हुनाले यी नीतिहरू पनि महिलाबाट प्रभावित हुन्छन्। अर्कोतिर गरिब जनसंख्यामा महिला बहुसंख्यक हुने हुनाले जनसंख्या वृद्धिमा महिलाको भूमिका केन्द्रमा रहेको हुन्छ। जसले महिलालाई प्राकृतिक वातावरणको क्षेत्रमा विशेष सम्बन्ध स्थापित गराइदिन्छ। महिलाले अधिकांश अवस्थामा जनसंख्याको गुणस्तर निर्धारण

गर्दछन् । किनकि महिला जननीमात्र नभई बालबालिकाकी प्रथम शिक्षिका हुन् र बालबालिका आउने दिनका नीति-निर्माता हुन् । अर्कातिर जन्मान्तरसम्बन्धी उपयुक्त ज्ञानको अभावका कारण हुने अनियन्त्रित गर्भधारणले बाल मृत्युदर बढ्छ । यो परिणाम भोग्ने महिलाहरू सन्तानका चाहनामा अझ बढी सन्तान जन्माउन उद्यत हुन्छन् । बाँचेका शिशुको शारीरिक तथा मानसिक विकासमा प्रतिकूल असर निश्चित रुपमा पर्ने हुन्छ । अर्कातिर बसाइँ सराइँ र बढ्दो शहरीकरणले समेत महिलाको अवस्थामा गम्भीर र प्रतिकूल असर पारिरहेको हुन्छ ।

महिलाहरू नै प्राकृतिक स्रोतका मुख्य उपभोक्ता हुन्, यस अर्थमा कि महिलाहरू नै घरका व्यवस्थापक हुन्छन् । परिवारको खानपानको व्यवस्था महिलाले मिलाउनुपर्दछ । त्यसैले खाना पकाउन दाउरा खोज्ने, गाईबस्तुका लागि घाँसपात, पानी इत्यादिको व्यवस्थाका लागि महिलाहरू माटो, पानी र जंगलजस्ता प्राकृतिक स्रोतमा निर्भर हुन्छन् । त्यसैले वातावरण र महिलाबीचको सम्बन्धलाई विशेष मानिन्छ । महिलावर्गमा परम्परागत ज्ञान र स्रोतको व्यवस्थापनसम्बन्धी सीप हुने भएकाले उनीहरूलाई दिगो विकासका लागि वातावरणको आवश्यक हेरचाहका मूल सूत्रधारका रुपमा लिन सकिन्छ । तर नेपालजस्तो विकासोन्मुख मुलुकमा महिलाको ज्ञान र सीपलाई पहिल्याउन सकिएको देखिन्न । बालबालिकाको लालनपालन र शिक्षादीक्षाको मूल अभिभारा महिलामा हुने हुनाले उनीहरू बालबालिकाको कलिलो मस्तिष्कमा भविष्यका लागि वातावरण तथा विकासका बारेमा सकारात्मक दृष्टिकोण भर्न सक्ने स्थानमा रहेका हुन्छन् ।

वातावरण विनाश गर्ने कुनै पनि गलत किसिमको विकास रणनीति तथा परियोजनाहरूको पहिलो शिकार भनेकै महिला र बालबालिका बन्न पुग्छन् । नगदेबालीको व्यापक लहरका कारण अन्नको उत्पादनमा ह्रास आएको छ भने वन जंगलको फडानीले खानेपानी तथा बाल्ने दाउराको अभावमा महिलाहरू टाढा-टाढासम्म जान बाध्य छन् । हुनत वर्तमान सामुदायिक वनको अवधारणा र विकासले ग्रामीणस्तरमा महिलाको

स्थितिलाई केही हदसम्म सुदृढ भने बनाएको छ ।

खासगरी शहर आसपासका क्षेत्रमा महिलाहरूले दैनिक आवश्यकताका वस्तुहरू घाँस, दाउरा, पानीका लागि लामो दूरी तय गर्नुपर्छ । जसका कारण उनीहरूको अत्यधिक समय यही आवश्यकता पूरा गर्ने काममा बित्छ र उनीहरू बालबालिकाको हेरचाह तथा आयआर्जनका अन्य काम गर्नबाट वञ्चित हुन्छन् । उनीहरूलाई वातावरण व्यवस्थापनतर्फ सोच्ने फुर्सद कमैमात्र हुन्छ । जब महिला व्यस्त हुन पुग्छन् त्यसको सोझो असर बालबालिकामा पर्छ । यी सबै कारणहरूले गर्दा महिला जनसंख्या तथा वातावरण संरक्षण र बालबालिकासम्बन्धी कुनै पनि कार्यक्रमको सफल कार्यान्वयनका लागि महिलालाई केन्द्रमा राख्नु अत्यन्त आवश्यक छ ।

प्राकृतिक सम्पदाहरूको व्यवस्थापनको क्षेत्रमा महिलाको गहन भूमिकालाई मनन गर्ने हो र बालबालिकाको भविष्य सुनिश्चित गर्ने हो भने उनीहरू स्रोत व्यवस्थापनका अति प्रभावकारी अगुवा बन्न सक्छन् । यसबाट महिलाहरूले आफ्नो नजिकको स्रोत व्यवस्थापन जस्तो नर्सरी राख्ने समूह गठन गरी वन व्यवस्थापन गर्ने आदि कार्य गरी आफ्नो आयआर्जनलाई बढाउन सक्छन् । महिलाहरू अतिरिक्त आय भएपछि उनीहरू शिक्षातर्फ आकर्षित हुन्छन् र उनीहरू जनसंख्याको चापको दूरगामी असर बुझ्न सक्ने हुने हो भने जन्मदरमा ह्रास आउँछ र जनसंख्या नियन्त्रणमा सघाउ पुग्छ । परिवारको संख्या कम हुने भएपछि त्यसका सकारात्मक असरहरू देखिन सुरु हुन्छन्, जस्तो खाद्यान्न सुरक्षा, बालबालिकाको पोषण, स्वास्थ्य, शिक्षा आदि ।

नेपाली समाजमा व्याप्त अन्धविश्वास, कूरीति तथा उच्च वर्ग भनाउँदाहरूले कथित निम्न वर्गमाथि गर्ने शोषण, दमन र अत्याचारका रीतिरिवाजलाई हटाउन तथा समानताको आधारमा समाजलाई प्रगतिको बाटोतर्फ अघि बढाउन सामुदायिक रेडियोले पथप्रदर्शकको भूमिका खेल्न सक्छ । सामुदायिक रेडियो समाजको आवाज प्रतिविम्बित गर्ने वा अघि ल्याउने सशक्त माध्यम भएकाले यसमार्फत हुने अन्तर्क्रिया तथा यसबाट

लिइने शिक्षाले समाजको वैचारिक स्तर वृद्धि गर्नको साथै विभिन्न वर्गबीच भाइचारा र अपनत्वको भावनामा वृद्धि हुन्छ। समाजमा महिलाको अवस्था निकै पिछडिएको छ, त्यसैले उनीहरूलाई विकासको पथमा अग्रसर बनाउन समाजमा व्याप्त अन्धविश्वासप्रतिको महिलाका असमान व्यवहारलाई पाखा लगाउन सामुदायिक रेडियोले भूमिका खेलिआएका छन् र यसलाई अझ सशक्त रुपमा अघि बढाउनु जरुरी छ।

## कला, संस्कृति र शिक्षा

कला, संस्कृति र शिक्षा- राष्ट्रका अमूल्य निधि हुन्। तिनको उचित संरक्षण, व्यवस्थापन र प्रवर्द्धनले सामाजिक विकासको मेरुदण्ड निर्माण गर्दछन्। शताव्दियौंदेखि गौरव गरिँदै आएको नेपालका मौलिक कला र संस्कृति पिछडिएको अवस्थामा छन्। जसको संरक्षण गर्ने जाँगर हामीमा बेलैमा आएन भने पछि पछुताउनु सिवाय कुनै विकल्प रहन जाने छैन।

उदाहरणका लागि: काठमाडौंबाट ३० किलोमिटर पूर्व टाढा रहेको धुलिखेल व्यापारिक दृष्टिकोणका साथै सांस्कृतिक दृष्टिकोणले महत्त्वपूर्ण शहर हो। शहर यस अर्थमा कि त्यहाँ मोटरबाटो पुगेको छ र बस्ती घना छ। स्थानीय बासिन्दाले सयौं वर्षदेखि पूजाआजा गर्दै आएको त्यहाँ रहेको एउटा मन्दिरबाट उमामहेश्वरको मूर्ति हरायो। त्यसको प्रशासनिक जाँच अनुसन्धान गर्ने औपचारिकता पूरा गरियो र त्यो घटना त्यसै सेलाएर गयो। झन्डै १५ वर्षपछि एकजना विदेशी शोधकर्ताले त्यो मूर्ति जर्मनीको संग्रहालयमा रहेको स-प्रमाण दाबी गरिदिए र तिनै शोधकर्ताको अथक प्रयास र लगनले सो मूर्ति नेपाल फर्कियो। यो कामको सिलसिलामा ती शोधकर्ताले सरकारी निकायबाट प्रशासनिक रुपमा सकेसम्म निरुत्साहित हुनु परेको अनुभव रहेछ। कुनै एउटा विदेशीले नेपाली कला र संस्कृतिको बारेमा यति धेरै माया दर्शाउनु र लगनशील भएर यसको संरक्षणका लागि समर्पित हुनु सुखद आश्चर्य त हो नै। तर आफ्नो बहुमूल्य सम्पदाको संरक्षण गर्नेतर्फ जागरुक नहुनु

र हात बाँधेर बस्नु विडम्बनाको विषय हो । सामुदायिक रेडियोले यस्ता विषयहरूमा जनचेतना जगाउन सरकारी पक्षलाई जिम्मेवारी बाँध गराउन उत्प्रेरकका भूमिका निर्वाह गर्नुपर्दछ । सबभन्दा पहिले त आफ्नो कला संस्कृतिको संरक्षणका लागि सरकारको मुख ताकेर बस्ने समाजकै प्रवृत्तिको अन्त्य गराउनुपर्‍यो । आफ्नो अधिकारमात्र होइन दायित्वसमेत बोध गर्न सक्ने नागरिक समाज निर्माण गर्नमा सामुदायिक रेडियोले भूमिका खेल्न सक्नुपर्दछ ।

संस्कृति, राष्ट्रको पहिचान हो र यसको संरक्षण राष्ट्रको ढुकढुकी हो । यसको संरक्षणबाट आफ्नो पहिचानको संरक्षण हुन्छ । सामुदायिक रेडियोले संस्कृतिको संरक्षणलाई प्राथमिकता दिनु जरुरी छ । उदाहरणका लागि दुईवटा विषय लिउँ: पौभाचित्र नेपालको अथवा काठमाडौं उपत्यकाको त्यसमा पनि मल्लकालीन कान्तिपुरको मौलिक पहिचान हो । पौभाचित्र कान्तिपुर र तत्कालीन तिब्बतका बौद्ध गुम्बाहरूबीच शिक्षकहरूको आदान-प्रदानका क्रममा तिब्बत गएको कुरा विभिन्न अनुसन्धानकर्ताहरूले उल्लेख गरेका छन् । पौभाचित्रको संस्कृति बौद्ध दर्शनमा आधारित छ र यसमा हिन्दु संस्कृतिको पनि स्पष्ट छाप परेको छ । तर यसलाई अन्तर्राष्ट्रिय जगत्मा तिब्बती संस्कृतिको रुपमा लिइन्छ र नेपालमै पनि यसलाई थाङ्का भनेर चिन्न थालिएको छ। यसो हुनुमा पौभाचित्रको संरक्षण तथा प्रवर्द्धनको काममा सरकारी तहबाट देखाइने गरेको उदासीनता जिम्मेवारी छ । सामुदायिक रेडियोले यस्ता काममा पनि चेतना अभिवृद्धिको संवाहकको भूमिका खेल्न सक्छ। ताकि आफ्नो राष्ट्रिय कला-कौशल अर्काको बनेको टुलुटुलु हेर्नु नपरोस् ।

## योजना विश्लेषणका लागि सहयोगी

ठूला योजनाहरू कार्यान्वयन गर्दा योजनाबाट लाभ पाउने स्थानीय समुदायले तत्कालीन अवस्थामा केही दु:ख कष्ट त व्यहोर्नुपर्छ नै । यस्तो अवस्थामा कार्यान्वयनको चरणमा पुगेका त्यस्ता ठूला योजनाको दूरगामी प्रभाव तथा फाइदाहरूको बारेमा स्थानीयस्तरमा जानकारी दिने काममा

सामुदायिक रेडियोले अगुवाको रुपमा भूमिका निर्वाह गर्नुपर्दछ । अर्कोतिर योजनाबाट आमजनतामा नकारात्मक असर पर्ने देखिन्छ भने त्यसबारेमा सामुदायिक रेडियोले आमजनताको पक्षमा वकालत गर्नुपर्दछ । किनकि सरकारको सहयोगी भए तापनि सामुदायिक रेडियोले जनहितको पक्षमा रहने आफ्नो दायित्वलाई बिर्सन हुँदैन । अन्ततोगत्वा यसबाट सरकारलाई सहयोग पुग्छ । किनकि योजना निर्माणका समयमा सरकारी वा नीति निर्माण तहमा कुनै अनावश्यक दबाव परेर योजना बनेको हुनसक्छ । फलस्वरुप जनस्तरमा त्यसको असरको विस्तृत जानकारी नहुन सक्छ । उदाहरणका लागि श्रीलंकाको महाबेली रेडियोलाई लिउँ । देशको उत्तरी क्षेत्रमा सिंचाइका लागि श्रीलंकाली सरकारले महाबेली सिंचाइ परियोजना कार्यान्वयन गर्न आरम्भ गरेपछि त्यस भेगका हजारौं परिवार विस्थापित भए, जसबाट जनआक्रोश निकै बढ्यो । जनताको आक्रोश शान्त पार्न तथा योजनाको दूरगामी फाइदाबारे जानकारी गराउन सरकारले आफ्नो स्वामित्वको श्रीलंका ब्रोडकास्टिङ कर्पोरेसनको नियन्त्रणमा रहने गरी महाबेली सामुदायिक रेडियो स्थापना गऱ्यो । यो रेडियोले एकातिर कृषकहरूको विचार तथा आक्रोशलाई मुखरित गऱ्यो भने अर्कोतिर विस्तारै परियोजनाको दूरगामी फाइदाका बारेमा चेतना पनि फैलायो । जनआक्रोश मुखरित हुन पाएको हुनाले त्यो छिट्टै शान्त भयो र परियोजनाप्रतिको जनधारणा बद्लियो ।

## विज्ञान र प्रविधि

सामुदायिक रेडियोले समाजमा खेल्नुपर्ने अर्को महत्त्वपूर्ण भूमिका हो, विज्ञान र प्रविधिका क्षेत्रहरूमा भएका नयाँ खोजहरूबारे आमजनतालाई जानकार बनाउनु र समाजमा त्यसको व्यावहारिक प्रयोगबारे उत्प्रेरणा जगाउनु । आफ्ना श्रोताहरूबीच विज्ञान तथा प्रविधिका विषयमा चेतना जगाई विकास निर्माणका कार्यमा ती प्रविधिहरूको भूमिका स्पष्ट गराउनुका साथै कसरी ती प्रविधिलाई जनतामा आत्मसात गराउने भन्नेतिर सामुदायिक रेडियोले आफ्नो प्राथमिकता केन्द्रित गर्नुपर्दछ । चाहे विकसित होस् वा

विकासोन्मुख देश विज्ञान र प्रविधिले आफ्नो विकास र विस्तारका लागि सञ्चारमै भर पर्नु हुन्छ र समाजको तल्लो वर्गसम्म पुग्ने सञ्चार माध्यममध्ये सबैभन्दा प्रभावकारी माध्यम सामुदायिक रेडियो नै हो ।

## मानव अधिकार

आमसञ्चारको अथवा जनसञ्चारको क्षेत्रमा कार्यरत सबैले व्यक्तिगत एवं सामुदायिक रुपमा मानव अधिकारको परिपूर्तिका लागि योगदान गर्नुपर्दछ । यसमाथि पनि आमसञ्चारका माध्यम जस्तो सामुदायिक रेडियोले मानव अधिकारका सिद्धान्तहरूको परिपालन गर्नेमात्र नभई मानव अधिकार उल्लंघनका जस्तासुकै घटना वा सन्दर्भहरूबारे सूचना प्रवाह गर्नुका साथै मानव अधिकार हनन गरिएकाहरूको हकहितका लागि पैरवीसमेत गर्नुपर्दछ । यस अर्थमा एकातिर सामुदायिक रेडियोलाई मानव समाजको आधारभूत आवश्यकताको रुपमा लिइनुपर्दछ भने अर्कोतिर सामुदायिक रेडियोले मानव अधिकारका विषयहरूलाई आफ्नो मूल प्राथमिकतामा राख्नुपर्दछ ।

## राष्ट्रिय सार्वभौमिकताको संरक्षण

राष्ट्रिय स्वाभिमान र सार्वभौमिकताको सुदृढीकरणका लागि समाजलाई परिचालित गर्ने विषयलाई सामुदायिक रेडियोले आफ्नो प्राथमिकतामा राख्नुपर्दछ । आफ्नो प्राथमिकताको लक्ष्य हासिल गर्नेतर्फ पहल गर्दा सामुदायिक रेडियोले जनस्तरमा व्यक्ति-व्यक्ति र समाजबीचको मैत्रीलाई सुदृढ बनाउन र राष्ट्र-राष्ट्रबीचको सम्बन्धलाई समेत सुमधुर बनाउन सहयोगीको भूमिका खेल्न सक्ने कार्यक्रम निर्माण गर्नुपर्छ । यसका साथसाथै सामुदायिक रेडियोले आफ्नो प्राथमिकता निर्धारण गर्दा सांस्कृतिक थिचोमिचो तथा हस्तक्षेपलगायत आफ्नो मुलुकको छवि धमिल्याउने किसिमका आन्तरिक तथा बाह्य क्रियाकलापको समेत विरोधमा उत्रिनुपर्दछ र यस विषयमा आफ्ना श्रोतालाई सचेत र सचेष्ठ बनाउनुपर्दछ ।

## विकास निर्माण

विकास निर्माणको संवाहकका रुपमा सामुदायिक रेडियोले समाजमा खेल्नुपर्ने भूमिका गहन हुने भएकाले यसको प्राथमिकता पनि त्यसैअनुकूल निर्धारण गरिनुपर्दछ । सामुदायिक रेडियोले आर्थिक, सामाजिक तथा सांस्कृतिक हिसाबले विकास कार्यसँग सम्बन्धित सूचनाहरू सम्प्रेषण गरी त्यसबारेमा प्रभावकारी रुपमा जनस्तरमा वैचारिक मन्थन गराउने र समाजको तल्लो वर्गलाई विकासको मूलप्रवाहमा सक्रिय सहभागी बनाउनेतर्फ भूमिका खेल्नुपर्दछ ।

विकासको गतिलाई द्रुत बनाउन सामुदायिक रेडियोले समाजका सम्पन्न वर्गका लागि सूचना र मनोरञ्जन प्रदान गर्नेमात्र होइन, समाजसेवाका कार्यहरू जस्तो शिक्षा, स्वास्थ्य, सामाजिक सुरक्षा तथा समाजका साझा समस्याहरूलाई लक्षित गरी सामुदायिक स्तरमा समाजसेवाका विविध कार्यक्रमहरू सञ्चालन गर्नु सामुदायिक रेडियोको प्राथमिकतामा पर्नुपर्दछ । सामुदायिक रेडियोले स्थानीयस्तरमा जनताबीच रहेको असन्तोषलाई भड्किन नदिन भूमिका खेल्न सक्दछ भने राष्ट्रियस्तरमा अन्तर समुदाय संवादका माध्यमबाट सामाजिक आवश्यकतातर्फ नीति-निर्माताहरूको ध्यान आकर्षित गर्न सक्दछ ।

विकाससम्बन्धी नीति तथा कार्यक्रमहरूमा सञ्चारले खेल्ने भूमिकाका बारेमा विवाद गरिरहनुपर्ने अवस्था छैन । किनकि यो सधैं सहयोगी नै हुन्छ । सरसर्ती हेर्दा कुनै पनि मुलुकको विकासको गति कम हुनुमा वा मुलुकको विकासले लामो समयसम्म गति लिन नसकेको एउटा कारणमा सो मुलुकको अविकसित वा अनुदार सञ्चार पनि पर्न सक्दछ । समग्रमा भन्दा विकास र सञ्चार दुवैको समान लक्ष्य भनेको हरेक व्यक्तिको सहभागिता जुटाई समाजको उन्नति सुनिश्चित गर्नु हो ।

सामुदायिक रेडियोको एउटा मुख्य कार्य भनेको मुलुकका नीति तथा कार्यक्रमहरू समय-सापेक्ष छन् र तिनको निर्धारित लक्ष्य हासिल गर्नका लागि सहयोग र सहभागिता जनाउनुपर्छ भनी समाजमा उत्प्रेरणा जगाउनु हो । अर्कोतिर नीति निर्माणमा भएका कमी-कमजोरी तथा यसका अव्यावहारिक पक्षका बारेमा नीति-निर्मातासम्म सकारात्मक टिप्पणी तथा सुझाव प्रेषण गर्नु पनि सामुदायिक रेडियोको कार्य हो ।

कुनै पनि विकासोन्मुख मुलुकले गर्न चाहेको सामाजिक परिवर्तनको कुनै पनि प्रक्रियामा सञ्चार जगको रुपमा बसेको हुन्छ । त्यसैले संस्कृति, जातजाति, धर्म आदि मानव जीवनको उत्थानका लागि बनाइने कुनै पनि योजनामा सञ्चारलाई एक अंगका रुपमा विकसित गर्नुपर्दछ । अन्यथा त्यस्तो विकास लंगडो बन्न जान्छ । नेपालजस्तो मुलुक जहाँ विकासका पूर्वाधार सबै क्षेत्रमा पुग्न सकेका छैनन् त्यहाँ केन्द्रिकृत योजनाले जनतालाई राहत पुऱ्याउने विषय टाढै हुन्छ । यस्तो अवस्थामा सामुदायिक रेडियोले स्थानीय स्तरमा बन्ने योजना र तिनको महत्त्व तथा योजना सफल बनाउन जनसमर्थन जुटाउने काममा एकमात्र माध्यमको भूमिका खेल्न सक्छ ।

विकासका हरेक प्रक्रियामा सहयोग पुऱ्याउने कार्य अति नै जटिल छ । त्यसैले सञ्चार र यससम्बन्धी नीतिहरूलाई विकास प्रक्रियामा पूरकका रुपमा मात्र लिनुको सट्टा विकासको चुरोका रुपमा लिइनुपर्छ । साथै विकास निर्माणका प्रक्रियामा सञ्चारको छुट्टै स्थान रहने भएकाले यसको अध्ययन तथा मनन गरी सम्पूर्ण विकास प्रक्रियाको सफलताको

कडीका रुपमा प्रयोग गर्नुपर्दछ । नेपाल जस्ता विकासोन्मुख राष्ट्रका लागि आधारभूत आवश्यकताको एक अंशका रुपमा सामुदायिक रेडियोको महत्त्व दिन प्रतिदिन बढ्दै गइरहेको छ । यसको प्रयोग वा उपयोग जति बढी गर्न सक्यो समाजमा प्रभाव त्यति नै बढ्दै जान्छ र गइरहेको छ ।

कुनै पनि विकासोन्मुख मुलुकमा सामुदायिक रेडियोको संरचना विकास संरचनासँग तालमेल राख्ने किसिमको हुनुपर्दछ । विकासका नीति तथा कार्यक्रमहरूले नै सञ्चार क्षेत्रसँग सम्बन्धित खासगरी सामुदायिक रेडियोसँग सम्बन्धित नीति तथा कार्यक्रमहरूलाई अप्रत्यक्ष रुपमा निर्देशित गरिरहेका हुन्छन् । यसमा रोचक कुरा कस्तो हुन्छ भने सूचना र सञ्चार स्थिर बन्न गएपछि विकास प्रक्रिया ओइलाएर तथा सेलाएर जान्छ । सूचना तथा सञ्चारको क्षेत्रमा आउने संरचनात्मक तथा गुणात्मक सुधारले समाजको विकासलाई निर्देशित गर्दछ ।

सञ्चार र विकासबीच रहेको यो अन्योन्याश्रित सम्बन्धले पनि विकास र सञ्चारप्रतिको राजनीतिक दृष्टिकोण स्पष्ट र रचनात्मक हुनु जरुरी हुन्छ । अन्यथा विकासका सम्पूर्ण क्रियाकलापहरू अवरुद्ध हुन पुग्छन् । जसको असर प्रत्यक्ष रुपमा सञ्चार क्षेत्रमा परी नै हाल्छ । सामाजिक, आर्थिक तथा सांस्कृतिक विकासमा सामुदायिक रेडियोको अहम् भूमिका हुने हुँदा सामुदायिक रेडियो स्थापना तथा सञ्चालन गर्ने कामलाई सरकारले प्राथमिकता दिनुपर्दछ । सञ्चारको अवस्थाले विकासका समग्र प्रक्रियामा महत्त्वपूर्ण भूमिका खेल्छ ।

त्यसैले यसलाई राष्ट्रिय विकास तथा सामाजिक परिवर्तनको अभिन्न अंगका रुपमा स्थापित गरिनुपर्दछ भन्ने स्वीकार गरिसकेको अवस्थामा आमसञ्चारका प्रतिष्ठान तथा व्यावसायिक जनशक्ति दुवैलाई स्थानीय तथा राष्ट्रियस्तरमा विकास प्रक्रियाका अभिन्न अंग मानेर सञ्चार नीति तर्जुमा गरिनुपर्दछ । सञ्चारको बलियो सम्बन्ध विकाससँग हुने भएकाले सामुदायिक रेडियो जस्ता सञ्चारका माध्यमहरूलाई विकासको सहयोगी तथा विकासको संवाहकका रुपमा प्रयोग गर्नेतर्फ सचेत रहनुपर्दछ ।

***सूचना प्रवाहः***– एउटा योजनाबद्ध विकासको लक्ष्य हासिल गर्न

जनमानसलाई सूचना र शिक्षा प्रदान गर्नुका साथै उनीहरूमा विकासप्रति उत्प्रेरणा जगाउने दिशामा सामुदायिक रेडियो नै सबैभन्दा प्रभावकारी माध्यम बन्न सक्दछ । नेपालको अधिकांश जनसंख्या ग्रामीण क्षेत्रमा बस्ने भएकाले ग्रामीण सञ्चारको सशक्त माध्यमका रुपमा सामुदायिक रेडियोलाई स्थापित गर्नु जरुरी हुन्छ । यसले दिने कार्यक्रमहरूमा समग्र विकास प्रक्रियामा एकीकृत गर्ने र तिनलाई सहयोग पुग्ने तथा ग्रामीण जनताको आर्थिक, सामाजिक तथा सांस्कृतिक विकासप्रति आकर्षित गर्न सक्ने सामग्रीले प्राथमिकता पाउनुपर्दछ । एउटा बस्ती र अर्को बस्ती बीचका बासिन्दामाझ सेतुको काम गर्न सामुदायिक रेडियो सफल बन्न सक्नुपर्दछ ।

एक बस्ती र अर्को बस्तीबीचका बासिन्दामा आपसी सूचनाको आदान-प्रदानले उनीहरूमाझ आफ्नोपनको विकास गर्दछ । साथै एक बस्ती र अर्को बस्तीबीच हुने सूचनाको आदान-प्रदानले आर्थिक क्रियाकलापमा साझेदारी पनि बढ्न जान्छ । बस्तीहरूबीच आर्थिक, सामाजिक, सांस्कृति आदान-प्रदान तथा परिचालनका लागि यस्तो प्रक्रिया महत्त्वपूर्ण हुन्छ । चाहे ग्रामीण इलाका होस् वा शहरी, सूचनाको आदान-प्रदान वा सञ्चार जीवनको अभिन्न अंग बनिसकेको छ । सञ्चारले ग्रामीण विकासको प्रशासकीय प्रक्रियामा समेत सहयोग पुऱ्याउँछ । कुनै पनि क्षेत्रको व्यापारिक तथा प्राविधिक विकासका लागि सूचनाको आदान-प्रदान पूर्वशर्त बन्न पुगिसकेको छ । यही पूर्वशर्तका कारण –के नीति निर्माता, के योजनाकार, के कार्यान्वयनकर्ता र के उपभोक्ता/श्रोता– विकास प्रक्रियामा संलग्न सबैका लागि विचार आदान-प्रदान तथा सूचनाको प्रवाहका लागि सामुदायिक रेडियो माध्यम बन्न सक्नुपर्दछ । सामुदायिक रेडियोलाई विज्ञान, शिक्षा, प्रविधि, सूचना आदि विकास प्रक्रियाका लागि भरपर्दो साधनका रुपमा प्रयोग गरिनुपर्दछ । खासगरी विकास क्रियाकलापबारेको ज्ञानको प्रसारका लागि जसको मुख्य लक्ष्य भनेको पिछडिएका र ग्रामीण इलाकाका श्रोता बनुन् ।

यति हुँदाहुँदै पनि सामुदायिक रेडियोहरूले सान्दर्भिक सूचना प्रवाह

गरेर ग्रामीण विकास योजनाहरूमा सहयोग वा योगदान गर्न सक्दछन् । र विकास प्रक्रियामा यसको सम्भावनालाई एकीकृत रुपमा प्रयोग गर्न सकिन्छ भन्नेतर्फ नीति-निर्माता, सञ्चारकर्मी तथा विकास कार्यक्रममा संलग्न व्यक्तिहरूको ध्यान आकर्षित गर्न सक्छन् । सामुदायिक रेडियो कुनै विरोधी स्वरमात्रै उठाउन वा समाजलाई भड्काउन स्थापना गरिँदैन । तर यो भ्रष्ट र विकास विरोधीहरूको आँखाको कसिङ्गर भने सधैं बनिरहने गर्दछ ।

विकास प्रक्रियाका लागि उत्प्रेरकको भूमिका:– सामाजिक विकास र उन्नतिका लागि सामुदायिक रेडियोको क्षमतालाई पूर्णता प्रदान गर्न आर्थिक योजना, अन्तर मन्त्रालय समन्वयजस्ता बोक्रो कुराले मात्रै पुग्दैन । यसका लागि लक्ष्य र नीतिबीचको तालमेल, विकास प्रक्रियाका लागि सामुदायिक रेडियोलाई प्रयोग गर्ने तत्परता, आवश्यक ज्ञान र सीप साथै अनुसन्धानमा आधारित तौर-तरिकाहरू, सञ्चारकर्मीहरूको सहयोग र समुदायको संलग्नता आवश्यक हुन्छ । विकास प्रक्रियामा सामुदायिक रेडियोको सकारात्मक र नकारात्मक दुवै भूमिका हुन सक्दछ । यसलाई राष्ट्रिय प्रश्नसँग पनि जोडेर हेर्न सकिन्छ । प्रथमत: राष्ट्रिय स्वाभिमानलाई जगाउन र सुदृढ गर्न मद्दत पुऱ्याएर सकारात्मक भूमिका खेलेको हुन्छ भने यसले प्रत्यक्ष अथवा परोक्ष रुपमा परनिर्भरता जन्माउन तथा त्यसैको संरक्षण र विस्तार गर्न अहम् भूमिका खेल्ने नकारात्मक प्रभाव पार्न पनि सक्छ ।

नेपालमा सामुदायिक रेडियोको सुरुवात जुन परिवेशमा भयो, त्यस परिवेशलाई अध्ययन-मनन गर्दा नीति निर्माण तहमा बस्नेहरू फराकिलो सोच भएका छन् भन्ने महसुस गर्न सकिएको छैन । किनकि एक त सामुदायिक रेडियो र व्यापारिक रेडियोलाई एकैपटक इजाजत प्रदान गरिनु सान्दर्भिक जस्तो देखिएको थिएन भने अर्कोतिर सञ्चार नियमावली २०५७ ले सामुदायिक रेडियो र व्यापारिक रेडियोले गर्ने काम र समाजमा पर्ने सकारात्मक/नकारात्मक असरबारे विभेद नै गर्न छोडिदियो । सरकारी तहमा दुवै खाले रेडियोले सूचना र मनोरञ्जन

प्रदान गर्दछन् भन्ने बुझाई रहयो । त्यसैगरी व्यापारिक रेडियोमाथि चर्चा गरिएजस्तो भाषा, संस्कृति, कला र सूचनासम्मका हकमा परनिर्भरता जन्माउन र विस्तार गर्नमा जोडतोडका साथ लागेका देखिन्छन् भने सामुदायिक रेडियो राष्ट्रिय विकास तथा स्वाभिमानको श्रीवृद्धि गर्न अथक रुपमा लागिरहेका छन् । राष्ट्रको समग्र विकासमा सामुदायिक रेडियोहरूले प्राथमिकता पाउनुपर्ने हो जुन नेपालको सन्दर्भमा हुन सकिरहेको छैन ।

समाजको तल्लो वर्गसम्मको जनसहभागिता जुटाउन सहयोगीको भूमिका खेल्ने हुनाले सामुदायिक रेडियोको प्रगतिले अन्ततोगत्वा राष्ट्रिय हित अभिवृद्धि तथा जगेर्ना गर्दछ भन्ने ज्ञान भएको नीति-निर्माता नभएसम्म "काग कराउँदो छ, पीना सुक्दो छ" भन्ने उखान चरितार्थ हुनेछ । विकास प्रक्रियामा वा प्रयासमा जनसहभागिता सुनिश्चित गर्नु सामुदायिक रेडियाको नै भूमिका हुने भएकाले नीति-निर्माताहरूले यस्तो जनसहभागितालाई प्राथमिकता दिनु तथा त्यसबमोजिमको नीति निर्माण गर्नु जरुरी हुन्छ ।

सामुदायिक रेडियोको भूमिकालाई ध्यानमा राखे । नीति निर्माण गर्दा सामाजिक, सांस्कृतिक, आर्थिक र प्राविधिक पक्षलाई ध्यानमा राख्नुपर्दछ । यस्ता नीतिहरू बहुआयामिक र सबै तहका जनताको प्रतिनिधि हुनु जरुरी हुन्छ । योजना निर्माण गर्दा विद्यमान भौतिक पूर्वाधारहरूको प्रयोग गरी त्यसको अधिकतम उपयोगतर्फ ध्यान पुऱ्याउनुपर्दछ । अन्यथा नेपालजस्तो मुलुकका लागि दिनानुदिन आर्थिक भार बढ्न जाने हुन्छ । सामुदायिक रेडियोसमेत समेटिने गरी तर्जुमा गरिने कुनै पनि सञ्चार योजना सामाजिक लक्ष्य हासिल गर्ने एउटा प्रक्रिया हो ।

यो प्रक्रिया र सञ्चार प्रविधिबीच तादात्म्य स्थापित गराउनुपर्दछ, ताकि यसले समग्र विकास प्रक्रियाका लागि उत्प्रेरकको भूमिका खेल्न सकोस् । सञ्चारसम्बन्धी योजनाका दुई चरण हुन्छन् । पहिलो सञ्चार प्रणाली र दोस्रो साधन जसमार्फत प्रणालीले कार्य गर्दछ । यी दुवैले सूचना प्रवाह गर्नका लागि आवश्यक पूर्वाधारको विकास, सञ्चार

प्रक्रियालाई निर्देशित गर्ने कानुनी तथा प्रशासकीय संरचना जनसहभागिता, व्यावसायिक संस्थाहरूको स्थापना र सञ्चारकर्मीहरूको तालिम आदिको व्यवस्था गर्दछन् । तर यी सबैका लागि योजनाको संरचना संवेदनशील र लचिलो हुन जरुरी हुन्छ । यस्ता योजना समयसापेक्ष तथा नीति निर्माण तहसँग प्रत्यक्ष सरोकार राख्ने किसिमका हुनुपर्दछ । साधारणतया सञ्चार योजनाका दुई पाटा हुन्छन्– सार्वजनिक र विकास नीति तथा सञ्चार प्रणालीको भौतिक पूर्वाधार ।

सामुदायिक रेडियोको पहिलो सरोकार सार्वजनिक तथा विकास नीतिसँग रहेको हुन्छ भने यसको अर्को सरोकार सञ्चार प्रणालीको भौतिक पूर्वाधारसँग हुन्छ । किनकि सामुदायिक रेडियो समाजको तल्लो तहसम्म सूचना, शिक्षा तथा विकासका कार्यक्रमहरू पुऱ्याउने साधन हो भने अन्त्यमा यसले सञ्चारसम्बन्धी राष्ट्रिय नीति निर्माणमा योगदान पुऱ्याउने कार्य गर्दछ । नीति निर्माण तहमा बस्नेले सामुदायिक रेडियो समाजमा विद्यमान ऊर्जालाई संगठित गरी त्यसलाई परिचालन गर्ने काममा सहयोग पुऱ्याउने भरपर्दो सञ्चारमाध्यम हो भन्ने बुझ्नु जरुरी छ ।

सरकारी सञ्चारमाध्यमबाट प्रसारित सामग्री सर्वसाधारणसम्म पुग्नमा कठिनाइ भइरहेको एवं सरकारी सञ्चारमाध्यमले विश्वसनीयता गुमाइरहेको अवस्थामा देशको विकास प्रक्रियामा जनसहभागिता जुटाई सो जनशक्तिलाई रचनात्मक मार्गमा डोऱ्याउने प्रयासका लागि स्थापना भएका सामुदायिक रेडियोहरूका अगाडि आउने चुनौती तथा वहन गर्नुपर्ने दायित्व निकै कठिन हुनु स्वभाविक हो । सञ्चार क्षेत्रमा सरकारी सञ्चारमाध्यमको आधिपत्य भए पनि जनसमुदायलाई शिक्षा, संस्कृति, कला, विकास, वातावरणलगायत विविध पक्षमा सूचना तथा जानकारी दिने प्रभावकारी र वैकल्पिक माध्यमका रुपमा सामुदायिक रेडियो स्थापना हुन थालेका छन् । सर्वसाधारणलाई दिनदिन अवस्थामा नै राख्न चाहने निहीत स्वार्थबाट प्रेरित सरकारी अधिकारीहरूले सामुदायिक रेडियो अस्तित्व आउँदा आफ्नो अभिष्ट साध्य हुन नसक्ने देखेर विविध झमेला खडा गर्ने गरेको कुरा नौलो मान्न सकिँदैन । यद्यपि सामुदायिक रेडियोहरूले आफूलाई सक्षम बनाउनेतिर पहल गर्नुपर्नेमा उल्टो व्यक्ति र शक्ति केन्द्रित हुँदै जान खोज्नु वा बनाउनेतर्फ कसरत गर्नु विडम्बनापूर्ण नै भएको छ ।

कुनै पनि समाज आफैंमा असल वा खराब हुँदैन समाजका सदस्यहरूको कारण समाजले असल वा खराबको पगरी पाएको हुन्छ । त्यसैगरी कुनै पनि निकाय आफैंमा भ्रष्ट वा अक्षम हुँदैन, त्यसमा कार्यरत जनशक्तिको मान्यता, व्यवहार र क्रियाकलापले नै सो निकायको श्रेणी निर्धारण गरिदिन्छ । नेपालका सामुदायिक रेडियोहरूमा देखिएको हालसम्मको सबैभन्दा ठूलो कमजोरी वा चुनौती भनेको नेतृत्वको कमी, कमजोरी, अनियमितता, बौद्धिक टाट पल्टाई, संकुचित सोचाइ, समुदायका कमी-कमजोरी वा असमर्थतालाई राजनीतिक रङ्ग लगाइदिने दाउपेच आदि नै प्रमुख रुपमा देखिएका छन् । त्यसपछि आउने चुनौती भनेको आर्थिक स्रोत नै हो । हुनत सामुदायिक रेडियोहरू समाजकै योगदान वा सहयोगबाट सञ्चालन हुनुपर्ने हो । तर नेपाली समुदाय आर्थिक सहयोग जुटाएर रेडियो सञ्चालन गर्ने तथा त्यसलाई टिकाइराख्नुपर्छ भन्ने

मान्यतामा पुगिसकेका अवस्थामा छैनन् । आर्थिक सहयोग गर्ने केही अपबादबाहेक हरेक दाताको सहयोगका पछाडि उसका व्यक्तिगत वा राजनीतिक स्वार्थ लुकेकै हुन्छ । जसले पछि गएर सामुदायिक रेडियोको जनशक्ति तथा नीति निर्माण तहलाई प्रभावित गरेर आफ्नो स्वार्थसिद्धिको माध्यम बनाउँछ । सकेन भने सो रेडियोको अस्तित्वलाई चुनौती दिनेलगायत कुनै पनि अस्थिरताजनक दाउपेच गर्न पछि पर्दैन । त्यसैले सामुदायिक रेडियोको मूल चुनौती भनेकै समाजमा रहेका अगुवाहरूको सोचाइ र बुझाइमा रहेको अस्पष्टता वा गलत व्याख्या हो भन्नुमा अत्युक्ति नहोला ।

सामुदायिक रेडियोका लागि रहेको अर्को चुनौती हो– सहयोगी संस्थाको रुचि तथा स्वार्थलाई पछ्याउनुपर्ने बाध्यता । कुनै पनि संस्था वा निकायले सामुदायिक रेडियोलाई दिने सहयोग उसको आफ्नो क्रियाकलापको प्रचारका लागि नै बढी गरिरहेको हुन्छ । तर अपवादका रुपमा केही यस्ता गैरसरकारी संगठन पनि छन्, जसले नि:स्वार्थ भएर सामुदायिक रेडियोलाई सहयोग गर्दै आएका छन् । अन्यथा समाजलाई सुमार्गमा लैजाने समाजको सोचाइको स्तर बढाउने तथा उनीहरूको दीर्घकालीन हितलाई ध्यान दिनेभन्दा परियोजनाको स्वार्थ र अन्य स्वार्थसिद्ध गर्नेतर्फ प्रेरित रहेका संघसंस्था नै बढी पाइन्छन् । यी सम्पूर्ण कुराहरूलाई सन्तुलनमा राख्नका लागि सामुदायिक रेडियोको नेतृत्व सक्षम, सबल, अधिकार सम्पन्न तथा सञ्चारको महत्त्व बुझेको तथा नि:स्वार्थ भएर सूचना प्रवाह गर्न सक्ने लगनशील व्यक्तिले गर्नुपर्दछ ।

व्यापारिक प्रतिष्ठानहरूबाट हुने सेवाका चरणबद्ध क्रियाकलाप, विविध व्यापारिक तथा व्यावसायिक प्रयोगमा आउने, उत्पादन आदि आर्थिक क्रियाकलापको मेरुदण्ड हुन् । त्यसैले सूचना तथा सञ्चार क्षेत्रले अर्थतन्त्र वा आर्थिक क्रियाकलापमा ठूलो भूमिका खेल्छ र आफ्नो छुट्टै स्थान राख्दछ । त्यसकारण यसको विश्लेषण हचुवाका भरमा गर्नुभन्दा यसको निर्भरता, राष्ट्रिय स्वाभिमान, अन्तर्राष्ट्रिय असर वा प्रभाव आदि विषयमा ध्यान पुऱ्याउनु जरुरी हुन्छ । तर दुर्भाग्यवस नेपालका नीति-निर्माता यी विषयहरूमा संवेदनशील हुनुभन्दा निहित स्वार्थ वा

व्यक्तिगत लाभ वा संस्था विशेषले दिने लाभांशको स्तर हेरेर नीति निर्माण गर्छन् भन्ने चर्चा व्यापक छ । केही मन्त्रालयका उच्च पदस्थ अधिकारीहरू अख्तियार दुरुपयोग अनुसन्धान आयोगलगायत विभिन्न निकायमा बयान दिन जानुपर्ने तथा कारगारको हावा खानुपर्ने अवस्था देखिनु यसको ज्वलन्त उदाहरण हो । यी विविध कारणहरूबाट प्रभावित समाजका लागि केही गरौं भनेर खुलेका नेपालका सामुदायिक रेडियोहरूले आर्थिक अभावको ठूलै चुनौती सामना गर्नुपरिरहेको छ ।

समाजको आर्थिक उन्नति, विकासका लागि अपरिहार्य शर्त हो । समाजको आर्थिक विकासका लागि नभई नहुने सेवा तथा वस्तुको उत्पादन हुन सकेमा आर्थिक उन्नतिको लक्षण देखिन सक्छ । हालको अवस्थामा आर्थिक तथा सामाजिक रुपमा समाजलाई एकीकृत गर्ने र सो शक्तिलाई देश विकासमा लगाउनेतर्फ प्रेरित गर्ने दायित्व सामुदायिक रेडियोहरूमा छ । सामुदायिक रेडियोहरूमा लगानी हुनु र नहुनुले समाजको सामाजिक, आर्थिक र सांस्कृतिक स्तरको प्रतिनिधित्व गर्दछ किनकि समाजका यी पूर्वाधारले जनचासो खासगरी सामुदायिक रेडियोप्रति को–को प्रतिनिधित्व गर्ने गर्छन् । एकातिर यस्तो अवस्था छ भने अर्कोतिर प्रविधिको विकास तथा उपकरणहरूको चुस्तताले रेडियो कार्यक्रमका विषयवस्तु ओझेलमा पर्ने गरेका छन् । श्रोताले सुन्ने र मूल्यांकन गर्ने भनेको सामुदायिक रेडियोको उपकरण होइन कार्यक्रम हो भन्ने कुरा ओझेलमा पर्दै गएको छ ।

श्रोताले उपकरणसँग त्यति सरोकार राख्दैनन् । उनीहरू आफ्नो सरोकारका वा चासोका कार्यक्रम सुनेर त्यसबाट लाभ हुने भएमा मात्र रेडियो सुन्ने धैर्य गर्न सक्छन् होइन भने रेडियो सुन्नुपर्छ भन्ने बाध्यता देखिंदैन । भौतिक पूर्वाधारमा गरिने लगानी त्यति ठूलो समस्या होइन । तर कार्यक्रममा गरिने लगानी दीर्घकालीन र दिगो स्रोतको आवश्यकता तथा कार्यक्रमको स्पष्टतामा निर्भर गर्दछ । जसप्रति चनाखो जनशक्ति सामुदायिक रेडियोहरूमा कमैमात्र देखिएका छ । अब सामुदायिक रेडियोहरूमा रहेका शृङ्खलाबद्ध चुनौतीहरूका बारेमा चर्चा गरौं:–

*(क) अदूरदर्शी नीति तथा ओहोदामा बसेकाहरूको सजकः–* नेपालमा फ्रिक्वेन्सी मोड्युलेसन (एफ.एम.) ब्यान्डमा रेडियो सामग्री प्रसारण गर्न दिने विषयमा राज्यपक्षबाट त्यति ठूलो नीतिगत विश्लेषण वा अध्ययन भएको पाइँदैन । अध्ययन विश्लेषण भएको भए कति जनसंख्याका लागि कतिवटा रेडियो अथवा कस्ता प्रकृतिका रेडियो प्रसारणका लागि इजाजत प्रदान गर्ने भन्ने स्पष्ट नीति हुन्थ्यो होला । साथै रेडियोले आफ्नो उद्देश्यअनुसारको कार्यक्रम सञ्चालन गरेको छ/छैन भन्ने अनुगमन हुनुपर्ने हो । तर त्यस्तो भएको पाइँदैन । अर्कोतिर राष्ट्रिय प्रसारण ऐन २०४९ ले प्रसारणलाई तरङ्ग क्षमताको आधारमा मात्र व्याख्या गरेको छ ।

रेडियो स्टेसन सञ्चालनका लागि दिइने इजाजतलाई सेवामूलक र नाफामूलक भनी दुई वर्गमा वर्गीकरण पनि गरेको छ । स्वभावैले यी दुई प्रकृतिका रेडियो स्टेसन सामुदायिक र व्यापारिक रेडियो स्टेसन भनेर चिनिने भए । यो प्रसारण ऐनलाई केही संशोधन गरी २०५८ सालमा निकालिएको नियमावलीले सामुदायिक र व्यापारिक रेडियोबीचको अन्तरलाई मेटाइदियो र दुवै रेडियो स्टेसनलाई समान वर्गमा पऱ्यो । ओहोदामा बसेकाहरूको निहीत स्वार्थपूर्ति हुने अवस्था नदेखिएपछि सामुदायिक रेडियोमाथि यो प्रहार भएको हो । अन्यथा सामुदायिक रेडियोले तिनै नीति तथा कार्यक्रमको प्रचार-प्रसारमा बढी जोड दिएका हुन्छन् । जसबाट अन्ततोगत्वा सरकार र समाजको हित भइरहेको हुन्छ ।

नाफाको भन्दा सेवा र राष्ट्रियताको भावना सुदृढ र प्रवल भएका सामुदायिक रेडियोहरूबाट मात्र यस्तो कार्य सम्भव छ । जबकि व्यापारिक रेडियोको पहिलो प्राथमिकता नाफा कमाउनु नै हुन्छ । तर नेपालको वास्तविकता उल्टो छ । सामुदायिक रेडियोले पाउनुपर्ने सुविधा व्यापारिक स्टेसनहरूले पाएका छन् । सामुदायिक रेडियोलाई दिइनुपर्ने सुविधा कटौती गरेर व्यापारिक स्टेसनहरूको पोल्टामा हाल्न मन्त्री

परिषद्बाट समेत विशेष निर्णय भएका उदाहरण प्रशस्त छन् । यसमा एक मन्त्री वा मन्त्रालयका कर्मचारी वा उच्च पदस्थ व्यक्तिलाई मात्र दोषी मान्न सकिँदैन । यसका लागि व्यापारिक रेडियो तथा सरकारको सम्पूर्ण निकायका व्यक्तिबीचको साँठगाँठ पनि उत्तिकै दोषी छ । यस्ता निर्णयहरू देशको सर्वोच्च निकाय मन्त्रिपरिषद्बाट भएका छन् । यस्तै नीतिहरूको परिणती हो, दक्षिण एसियाको पहिलो स्वतन्त्र सामुदायिक रेडियो "रेडियो सगरमाथा" । रेडियो सगरमाथा स्थापना भएको ६ वर्षको अवधिमा अधिराज्यभरमा दुई दर्जनभन्दा बढी एफ.एम. स्टेसन खुलेका छन् । जसमध्ये अधिकांश स्टेसन व्यापारिक नै छन् । कतिपय स्टेसनहरूमा त नीति निर्माताहरूकै अप्रत्यक्ष लगानीसमेत रहेको पाइन्छ । यस प्रकार सामुदायिक रेडियोहरू व्यक्तिगत स्वार्थबाट प्रेरित– ओहोदामा बसेकाहरूको निर्लज्ज निर्णयको बन्दी बन्न पुगेका छन् । व्यापारिक रेडियो स्टेसनको इजाजतका लागि लामो अवधिसम्म पर्खनुपरेको उदाहरण कमैमात्र छ । जबकि सामुदायिक रेडियो सञ्चालनका लागि निवेदन दिएर पर्खिबसेका समुदायको संख्या आधा दर्जनभन्दा बढी पुगिसकेको छ । सरकारी तहमा सामुदायिक रेडियोलाई प्रोत्साहित गर्ने, विस्तार गर्नेबारेमा स्पष्ट दृष्टिकोण छैन । सामुदायिक रेडियोहरू नाफामूलक नभई सेवामूलक हुन्छन् भने व्यापारिक रेडियो स्टेसनहरू सेवामूलक हुनु मुश्किलको कुरा हो । किनकि यिनको प्रकृति नै व्यापारिक र नाफामूलक हुन्छ । यी दुई रेडियोबीच वर्गीकरण गरी उचित नीति तर्जुमा गर्नुपर्ने हो, तर त्यसो गर्नुको सट्टा खुला बजार अर्थतन्त्रको दुहाई दिएर सरकारले दुवै रेडियोलाई एकै दर्जामा राखेर वित्तीय प्रतिस्पर्धाका लागि छोडिदिने काम गर्नु विडम्बना नै हो । यसले देश विकासका लागि जनचेतनामा अभिवृद्धि गरी सम्पूर्ण जनशक्तिलाई परिचालन गर्न सघाउ पुऱ्याउन सक्ने सामुदायिक रेडियोहरूको विकासमा अवरोध उत्पन्न गरेको छ ।

***(ख) संगठनात्मक कमजोरी:***–संगठन र व्यवस्थापन पक्षको उचित तालमेलबिना कुनै पनि संस्थाको सकारात्मक सञ्चालन हुन सक्दैन ।

संगठनको सुदृढीकरण तथा त्यसको व्यवस्थापन नै संस्थाको आधार हुन्छ । तर नेपालका सामुदायिक रेडियोहरूमा संगठनात्मक कमजोरी तथा फितलो व्यवस्थापन नै मुख्य समस्याको रुपमा देखिन थालेका छन् । सामान्यतया श्रोता, रेडियो र प्रसार गर्ने सामग्री भएपछि सामुदायिक रेडियो सञ्चालन भइहाल्छ भन्ने मान्यता राखिन्छ । तर रेडियोभित्रको दैनन्दिनी सञ्चालन गर्न आवश्यक पर्ने संगठनात्मक संरचना तथा त्यसलाई सुगमताका साथ अघि बढाउन आवश्यक पर्ने व्यवस्थापनको चुस्ततातर्फ त्यति ध्यान दिइएको पाइँदैन । नेपालमा हालसम्म अस्तित्वमा आएका चारवटा सामुदायिक रेडियोका चार भिन्न प्रकृति छन् । फलत: चारवटैका संगठनात्मक स्वरुप र व्यवस्थापनको ढाँचा पनि स्वभावैले फरक छन् । उदाहरणका लागि काठमाडौं उपत्यकामा रहेको रेडियो सगरमाथा । यो स्टेसन नेपाल वातावरण पत्रकार समूह भन्ने गैरसरकारी संस्थाको स्वामित्वमा रहेको छ ।

गैरसरकारी संस्थाअन्तर्गत सञ्चालन भएको हुँदा यसको सञ्चालन पद्धति पनि नेपाल वातावरण पत्रकार समूहको विधि-विधानअनुरुप नै छ । नेपाल वातावरण पत्रकार समूहभित्र हुने सानातिना समस्याको असर रेडियो सगरमाथामा पर्ने गरेको छ । नेपाल वातावरण पत्रकार समूहको कार्यसमितिको निर्वाचनबाट आउने नयाँ कार्यसमितिको रेडियो सगरमाथा सञ्चालनमा छुट्टै धारणा आउन सक्ने हुनाले रेडियोको व्यवस्थापन र नेपाल वातावरण पत्रकार समूहको कार्यसमितिबीच मनोमालिन्यको स्थिति देखिएको छ । रेडियोको संगठन तथा व्यवस्थापन साथै प्रसारणका लागि व्यावसायिक व्यक्तिहरूको खाँचो पर्दछ । त्यसका लागि स्वामित्व जसको भए पनि रेडियो सञ्चालन तथा व्यवस्थापन स्वतन्त्र रहनु जरुरी छ । तर यसका लागि फराकिलो सोच हुनु त्यतिकै आवश्यक छ ।

काठमाडौं उपत्यकामा रहेको मेट्रो एफ.एम. पनि सामुदायिक प्रकृतिकै रेडियो हो । यसको सञ्चालन काठमाडौं महानगरपालिकाको संरचनात्मक संगठनभित्र रहेको छ । फलस्वरुप महानगरपालिकाको नेतृत्वमा आउने हेरफेर तथा पदाधिकारीहरूको हेरफेरको प्रत्यक्ष असर

रेडियोमा पर्न गएको देखिएको छ । कुनै व्यक्तिको रुचिअनुसारको सूचना प्रसार नभएसम्म महानगरपालिका व्यवस्थापनले रेडियोमा कार्यरत कर्मचारी/सञ्चारकर्मीलाई अन्य स्थानमा वा पदमा सरुवा गरिदिने जस्ता कार्यले कार्यक्रम सञ्चालनमा समेत अनियमितता हुने गरेको स्पष्ट भएको छ ।

यसैगरी पाल्पा जिल्लामा रहेको सामुदायिक रेडियो रेडियो मदनपोखराको उदाहरण लिउँ । यो रेडियो गाउँ विकास समितिको संगठनात्मक संरचनाभित्र रहेको छ । फलस्वरुप समितिको नेतृत्व परिवर्तन त्यसमाथि पनि गाउँ विकास समिति दलगत परिवर्तन नै भयो भने त रेडियोले आफ्नो गति र दिशा नै परिवर्तन गर्नुपर्ने अवस्था आउन सक्छ । यसले सामुदायिक रेडियो स्थापनाको मूल मर्मलाई नै तहसनहस पारिदिन्छ ।

यसैगरी रेडियो लुम्बिनी सहकारीद्वारा सञ्चालित रेडियो हो । यसको पीडा रेडियो सगरमाथाको भन्दा निकै भिन्न भए पनि मेट्रो एफ.एम. र रेडियो मदनपोखराको भन्दा त्यति फरक भने छैन । रेडियो सूचना तथा अन्य सामग्रीहरूको संवाहक हो । त्यसको उचित प्रयोगबाट समाजमा ज्ञान तथा चेतनाको अभिवृद्धि गर्न सकिन्छ भन्ने कुरामा दुईमत रहँदैन । तर त्यही रेडियो गलत विचार, सोचाइ र प्रवृत्तिका मानिसको हातमा पर्न गयो भने त्यसले समाजमा नकारात्मक धारणा फैलाउनुका साथै सम्पूर्ण जनमानसमा सामुदायिक रेडियोप्रति नै वितृष्णा फैलाइदिन्छ । एउटा उदाहरण लिउँ: २०५८ सालको मध्यतिरको कुरा हो देशमा नयाँ सरकार बन्ने अथवा चुनाव हुने भन्ने द्वन्द्व चलिरहेको बेलामा सम्भावित सरकारमा सञ्चारमन्त्रीको पद दाबी गर्ने राजनीतिज्ञका एकजना सल्लाहकार यस पुस्तकका लेखककहाँ सामुदायिक रेडियो सञ्चालन गर्ने काममा सहयोग गर्नुपर्‍यो भन्दै आइपुगेका थिए । रेडियोकर्मी भएकाले लेखकले निकै चासो देखायो पनि ।

सुदूर पश्चिमको एउटा जिल्ला जहाँ सामुदायिक रेडियोको खाँचो नै देखिएको छ, त्यहाँ नयाँ रेडियो स्थापना गर्नु रेडियोकर्मीका लागि

चुनौती र अवसर दुवै हुन जान्छ । लेखकले राजनीतिज्ञका ती सल्लाहकारलाई निकै लामो भलाकुसारीपछि रेडियो स्थापनाको उद्देश्य, त्यसको संगठनात्मक स्वरुप, सञ्चालन आदिका विषयमा जिज्ञासा राख्यो । उनको स्पष्ट जवाफ थियो, निर्वाचन सम्पन्न नहुन्जेल त्यसको सञ्चालनको सम्पूर्ण खर्च राजनीतिज्ञले निजी रुपमा व्यहोर्ने, त्यसबाट आफ्नो चुनाव प्रचारको ठूलो खर्च जोगिने, अर्कोतिर रेडियो जस्तो प्रभावशाली सञ्चारमाध्यम स्थापनाबाट विकासप्रति आफ्नो प्रतिबद्धता प्रमाणित पनि हुने तर्क आएपछि लेखक छाँगाबाट खसेजस्तो भयो । राजनीतिज्ञहरू रेडियोको प्रयोगलाई कुन रुपमा गर्न चाहन्छन् र उनीहरूको बुझाइ के रहेछ ? भन्ने स्पष्ट नै भयो । ती राजनीतिज्ञ झन् सञ्चारमन्त्री नै भए भने सरकारी सञ्चारमाध्यमको “प्रयोग” वा दुरुपयोग कसरी होला भन्ने सोचेर लेखक अवाक भयो ।

यो त एउटा उदाहरण भयो । यस्ता उदाहरण खोज्दै जाँदा बग्रेल्ती भेटिन्छन् यस्ता सोचाइ र बुझाइबाट सामुदायिक रेडियोको संगठन र व्यवस्थापन उचित रुपमा हुनका लागि निकै कठिनाइ पर्ने कुरामा विवाद रहँदैन । कुनै पनि सामुदायिक रेडियो सञ्चालनका लागि उपयुक्त सञ्चारकर्मीहरूको छनौट, उपकरणहरूको उपलब्धता तथा व्यवस्थापन, स्रोत र साधनको उपयुक्त परिचालन र त्यसको अनुगमन रेडियोकै व्यवस्थापन पक्षले गर्दछ । यस्तो महत्त्वपूर्ण व्यवस्थापन पक्ष कमजोर र फितलो भयो अथवा बनाइयो भने सामुदायिक रेडियोले जनमानसमा लैजाने सन्देश पनि बेमौसमको बाजा जस्तै हुन्छ । सामुदायिक रेडियोको संगठनात्मक कमजोरीको अर्को पक्ष हो स्वयंसेवीको चयन ।

सामुदायिक रेडियोहरू समुदायबाट र स्वयंसेवीहरूबाटै चलेका वा चल्नुपर्ने भन्ने पश्चिमा मान्यता छ । त्यही मान्यतालाई अँगालेर नेपालका सामुदायिक रेडियोले पनि स्वयंसेवी जनशक्तिलाई प्राथमिकता दिएका वा दिन खोजेका छन् । स्वयंसेवी जनशक्ति भनेको पारिश्रमिक नलिईकन नै काम गर्ने जनशक्ति हो भन्ने मान्यता रहेकै कारण यसतर्फ विकृति आएको छ । रेडियो सगरमाथाको उदाहरण लिउँ: यहाँ स्वयंसेवी

जनशक्तिको ठूलो संख्या छ । तर त्यसमध्ये अधिकांश स्वयंसेवीले रेडियोमा गरिने स्वयंसेवा पैसा नलिई गरिने कामको रुपमा मात्र बुझेका छन् भने धेरैले केही समय स्वयंसेवा गरेपछि जागिर पाइन्छ भन्ने मान्यता बोकेको पाइयो । कमैमात्र स्वयंसेवी आफ्नो क्षेत्रमा बलियो पकड भएका र रेडियोलाई सहयोग गरौं, समाजलाई केही दिउँ भनेर आएका भेटियो । तर यस्ता स्वयंसेवीको संख्या औंलामा गन्न सकिनेमात्र छ । यही अवस्था अन्य सामुदायिक रेडियोले पनि भोग्दै आएका छन् । स्वयंसेवकको रुपमा केही समय काम गरेर बटुलेको अनुभवलाई व्यावसायिक रुप दिन खोज्नु स्वाभाविक  कुरा हो । तर स्वयंसेवा गर्नुलाई सोही संस्थाको जागिरे बन्नका लागि पहिलो खुड्किलो बनाउन खोज्नुचाहिँ  विडम्बना हो । यसमा सबैभन्दा ठूलो कमजोरी संगठनात्मक ढाँचामा रहेको छ । स्वयंसेवीको छनौट, उनीहरूको कामको प्रकृति, उनीहरूलाई दिइने जिम्मेवारी आदिको स्पष्ट किटान नहुने साथै स्वयंसेवी आफैं पनि आफ्नो दायित्वप्रति सचेत नहुने तर अधिकारका कुरा गरी हिँड्ने जस्ता विकृति सामान्यतया देखिएका छन् । यिनै अनुभवहरूबाट सामुदायिक रेडियोहरूले संगठनात्मक तथा व्यवस्थापनसम्बन्धी स्थितिलाई सुधार गर्ने कामलाई प्राथमिकता  दिनुपर्छ ।

*ग) श्रोताको स्तरः* आफ्ना श्रोता कस्ता र कुन वर्गका छन् र उनीहरूका लागि कस्तो सामग्री उत्पादन गर्ने भन्ने कुरामा सामुदायिक रेडियोहरूले सधैं ध्यान पुऱ्याउनुपर्दछ । यसको अर्थ श्रोताको अवहेलना गर्नु भन्ने पक्कै होइन । तर श्रोताको आर्थिक, सामाजिक र बौद्धिक स्तरलाई नसुहाउने कार्यक्रम भनेको प्रलापमात्र बन्न पुग्छ भन्ने कुरा सामुदायिक रेडियोहरूले सधैं ध्यानमा राख्नुपर्दछ । रेडियोको सबैभन्दा महत्त्वपूर्ण कार्य भनेकै श्रोताको ध्यानाकर्षण गर्नु हो र श्रोताको ध्यान तबमात्र रेडियोतिर आकर्षित हुन सक्छ जब रेडियोले श्रोताका लागि रुचिकर र आवश्यकीय सामग्री दिने गर्दछ । श्रोता भनेका रेडियोका ऊर्जा र शक्ति दुवै हुन्, तर ऊर्जा र शक्तिलाई उचित व्यवस्थापनमा राख्न

सकिएन भने त्यसको असर नकारात्मक पर्न जान्छ । श्रोता रेडियोसँग अति निकट बन्दै जाँदा रेडियोको दैनिक कार्यक्रम तथा कतिपय हदमा त व्यवस्थापनमा समेत चासो राख्न तथा त्यसलाई आफ्नो अनुकूल प्रभावित गर्न अथवा आफ्नो निर्देशनअनुसार सञ्चालन गर्न खोज्न सक्छन् । कतिपय सार्थक टिप्पणी दिने त हुन्छन् त कतिपय आफ्नो रुचिअनुसारको सूचना प्राप्त गर्न सकिएन भने आलोचना गर्दै हिंड्ने किसिमका हुन्छन् । व्यवस्थापनको तहमा बस्नेले यी सबैको सन्तुलन मिलाउन सक्नुपर्दछ । यस्तो मान्छेमा सञ्चारकर्मीले श्रोताको स्तर निर्धारण गर्ने एकमात्र कडी म नै हुँ भन्ने जस्तो अहम् पाल्नु पनि हुँदैन किनकि श्रोता विभिन्न पेसा, वर्ग, समूह तथा दृष्टिकोणका हुन सक्छन् र यसैअनुसार उनीहरूको सोचाइ र बुझाइको स्तर फरक हुन सक्छ ।

सञ्चारकर्मीको पनि सनकको एउटा उदाहरण दिउँः कुरा २०४६ सालतिरको हो भारतले नेपालविरुद्ध नाकाबन्दी गरेको थियो र नेपाल अधिराज्यका सम्पूर्ण नागरिक समस्या समाधानका लागि सरकारबाट भइरहेका प्रयास र राहतका कुराहरू सुन्न अति व्यग्र थिए । तत्कालीन अवस्थामा सञ्चारको अति सशक्त माध्यमको रुपमा सरकारी रेडियो– रेडियो नेपाल नै एकमात्र संस्था थियो । किनकि टेलिभिजन देशभर पुग्ने अवस्था पनि थिएन, न त अहिलेका जस्ता बग्रेल्ती सेटेलाइट च्यानलहरू नै । यस्तो अवस्थामा सरकारी रेडियो तिब्बतमा कृषकले पालिरहेको भेडाको संख्या, कुल भेडाको संख्या आदि कुरालाई मुख्य समाचारको रुपमा प्रसार गरिरहेको हुन्थ्यो । अझै पनि नेपालको सरकारी रेडियो रुवान्डामा भएको सानो दुर्घटनाको खबर भनिरहेको हुन्छ, जुम्लामा वा हुम्लामा खाद्यान्न अभाव भएको कुरा उसको प्राथमिकतामा परेको हुँदैन । यो रोगले विस्तारै सामुदायिक रेडियोहरूलाई समेत गाँज्दै ल्याइसकेको छ । यस्तो अवस्था आएपछि सामुदायिक रेडियोले श्रोताको रुचि हेर्नुको सट्टा श्रोताले सामुदायिक रेडियोको गति हेरेर दिक्क मान्नुपर्ने अवस्था आउँछ ।

अर्कोतिर प्रसारक वा सञ्चारकर्मी र श्रोताबीचको अति निकटता

वा दूरीले पनि सामुदायिक रेडियोले आफ्ना श्रोता चिन्न सक्ने स्थिति रहन जाँदैन । नेपालको हालको अवस्थामा प्राय: श्रोताले आफूलाई प्रसारक वा सञ्चारकर्मीभन्दा कम नठान्ने गरेको पाइएको छ । र सामुदायिक रेडियो भनेको समुदाय हो र यसमा समुदायका मानिसले नै बोल्न पाउनुपर्छ भनी अधिकार खोज्ने श्रोताको पनि कमी छैन । यस्तो अवस्थामा सञ्चारकर्मी आफू सक्षम छैन वा आफ्नै प्रलापमा नै व्यस्त रहने गर्छ भने श्रोताको दाबी पनि उचित नै हो भन्नुपर्ने अवस्था आउँछ । समुदायमा राजनीतिक जमात पनि श्रोताको रुपमा हुन्छ र सो राजनीतिक श्रोता जमातले रेडियोलाई आफ्नो पकडमा वा आफ्नो प्रभावमा राख्न प्रयास गरिरहेको हुन्छ । यस प्रयासमा राजनीतिक जमातले प्रसारकको रुपमा आफ्नो कार्यकर्तालाई रेडियो स्टेसनमा "घुसाउने" प्रयास  गरेको हुन्छ । बेलैमा सचेत बन्न नसकेको खण्डमा सामुदायिक रेडियोले राजनीतिक रंग लागेको लाञ्छना बोक्नुपर्ने हुन्छ, जसले समुदायकै अर्को राजनीतिक समूह अथवा गैरराजनीतिक श्रोता गुमाउनुपर्ने अवस्था आउन सक्छ ।

श्रोता अर्का किसिमका पनि हुन्छन् जो आफ्नो नाम रेडियोमा आइदेओस् भन्ने उद्देश्यले प्रसारकका नाममा सस्ता प्रशंसा लेखेर पठाउने गर्छन् । त्यही लहैलहैमा लागेर प्रसारकले "भुइँ" छोड्ने गरेका उदाहरण पनि प्रशस्त पाइन्छन् । यस्ता कुराहरूले सामुदायिक रेडियोको प्रतिष्ठा घटाउन अथवा धराशयी बनाउन मद्दत पुऱ्याउँछन् ।

***घ) सचेत समुदायको समस्या:*** सामुदायिक रेडियोका लागि निकै ठूलो सहयोगी बन्न सक्ने समाजको सचेत समुदाय पनि यदाकदा सामुदायिक रेडियोका लागि समस्या बनेर तेर्सिन सक्छ । जुन समूह सचेत छ उसलाई सामुदायिक रेडियोको शक्ति तथा उपयोगिताबारे ज्ञान हुन्छ । आफ्नो समूहको प्रभाव विस्तार गर्न यस्तो समूहले रेडियोको प्रसारण तथा व्यवस्थापन दुवै क्षेत्रलाई प्रभावित पार्न सक्छन् । समाजको तल्लो तहदेखि माथिल्लो तहसम्म पहुँच राख्ने तथा जनधारणा मोड्न सक्ने क्षमता पनि धेर-थोर राख्ने भएको हुनाले यो समूहको स्वार्थविपरीत जान सामुदायिक रेडियोलाई हम्मे पर्छ । अर्कोतिर सामुदायिक रेडियोले कुनै एक समूह

विशेषको स्वार्थसिद्धिको पछि लाग्दा आमश्रोताको हित नियाल्न पाउने अवस्था रहँदैन । यो चुनौती सामुदायिक रेडियोका लागि विडम्बनापूर्ण हुन्छ । सचेत समूहले आफ्नो निहित स्वार्थभन्दा माथि उठेर सामुदायिक रेडियोलाई सहयोग गरिदिएको खण्डमा नेपालजस्तो मुलुकमा सञ्चारको यो सशक्त माध्यम फस्टाउन पाउने अवस्था आउँछ । आफ्नो स्वार्थसिद्धि नभएका खण्डमा सामुदायिक रेडियोविरुद्ध अनावश्यक झन्झट सिर्जना गर्न, अनर्गल प्रचार गराइदिन तथा अस्वस्थ प्रतिस्पर्दा गराइदिनसमेत यो सचेत समूह पछि पर्दैन । सामुदायिक रेडियोका सञ्चालक तथा प्रसारकले यसतर्फ सजग हुन जरुरी छ ।

(ङ) ***सामग्री चयन र सञ्चारकर्मीः*** नेपालको अवस्थामा सामुदायिक रेडियोले एउटै क्षेत्रमा अलग-अलग रेडियोसँग प्रतिस्पर्धा गर्नुपर्ने अवस्था छ । सामुदायिक भावना नै रहेको दाबी गर्ने सरकारी रेडियो “रेडियो नेपाल” तथा बग्रेल्ती खुलेका अन्य व्यापारिक प्रयोजनका एफ.एम. रेडियोहरूसँग सामुदायिक रेडियोले प्रतिस्पर्दा गर्नुपरेको छ । सामुदायिक रेडियोसम्बन्धी तालिम, सुविधा पाएका अनुभवी व्यक्तिहरूको अति महत्त्वाकांक्षाका कारण खुलेका तथा खुल्दै जाने रेडियो र अन्य व्यापारिक रेडियोहरूसँग पनि कुनै दृष्टिले कम नहुने प्रकारका कार्यक्रम उत्पादन र प्रसार गर्नुपर्ने चुनौती सामुदायिक रेडियोहरूको रहेको छ । यो चुनौती सामना गर्न उपयुक्त सामग्रीको चयनमा सञ्चारकर्मीले उत्तिकै तत्परता देखाउनुपर्छ । यसबाहेक सञ्चारकर्मीले व्यवस्थापकीय, प्राविधिक, भाषिक, सांस्कृतिक नीतिगतलगायतका अनगिन्ती समस्याको सामना गर्नुपर्ने यथार्थ त छँदैछ ।

समाजमा रहेका निरक्षरदेखि विद्वान्सम्म, केटाकेटीदेखि बूढाबूढीसम्मका लागि आवश्यक खुराक दिन सक्नुपर्ने जिम्मेवारी भएको सामुदायिक रेडियोले सामग्री छनौटमा गरेको सामान्य त्रुटिले श्रोतामा ठूलो वितृष्णा फैलाइदिन सक्तछ । कुन सामग्री, कुन समयमा र कस्ता श्रोताका लागि उत्पादन प्रसारण गर्ने हो भन्ने सही निर्क्योल गर्न नसक्ने

हो भने त्यस्ता सामुदायिक रेडियोहरू श्रोतामाझ लोकप्रिय बन्न सक्दैनन् भन्ने हेक्का राखिरहनुपर्दछ । एउटा उदाहरण लिऔं: सरकारी रेडियो "रेडियो नेपाल" मा वर्षौंअघिदेखि बिहानको समयमा धार्मिक कार्यक्रम प्रसार गर्ने गरिएको थियो र समय थियो एक घण्टा । सरकार परिवर्तनको गति छिटो हुन थालेपछि कुनै एउटा दलको सरकारका पालोमा धर्मकर्मले मानिसलाई भिरु बनाउँछ भन्ने निचोड निकालेर त्यसको सट्टामा नागरिकलाई चेतनशील बनाउन भनेर बेसुरका गानाहरू चिच्याएका जस्तो आवाजका सामग्री प्रसारण गर्न थालियो । त्यसै समयमा एफ.एम. व्यान्डमा व्यापारिक रेडियो खुल्न थाले । जसले धार्मिक कार्यक्रम सञ्चालन गर्न थाले । त्यसपछि रेडियो नेपालको बिहानको प्रसारण सुन्ने श्रोताको जमात एफ.एम. प्रसारणतर्फ आकर्षित भयो । रेडियो नेपालको श्रोताको संख्या त्यस समयमा निकै घट्यो ।

यो अवस्था सामुदायिक रेडियोमा नआउला भन्न सकिँदैन । यसतर्फ सामुदायिक रेडियोका सञ्चारकर्मीले तथा नीति-निर्माताले सजग रहनुपर्दछ । प्रसारणका लागि छनौट भएका सामग्री उचित भएरमात्रै पुग्दैन, ती सामग्री श्रोताका रेडियो सेटसम्म स्पष्ट रुपमा तरङ्गीत हुनु पनि पर्दछ । जसका लागि स्टेसनको प्रसारण क्षमता सुदृढ हुनुपर्दछ । हालसम्म सामुदायिक रेडियोको स्थितिलाई हेर्दा प्राविधिक पक्षको कमजोरी पनि उत्तिकै देखिएको छ । ट्रान्समिटर र एन्टेनाबीच सन्तुलन तथा सामन्जस्य मिल्न नसक्नु, प्राविधिकहरूमै पनि उपकरणसम्बन्धी सैद्धान्तिक तथा व्यावहारिक ज्ञानको कमी आदि कारणहरूले गर्दा सामुदायिक रेडियोको प्रसारणमा चुस्तता आउन नसकेको देखिन्छ ।

यी सबै समस्याबाहेक सामुदायिक रेडियोको अर्को महत्त्वपूर्ण पक्ष सञ्चारकर्मी वा प्रसारक हो । जसले ठूलै समस्या खडा गर्न सक्छ । आफूले प्रसार गर्ने कार्यक्रम कुन उद्देश्यको, कुन विषयको, कस्ता श्रोताप्रति लक्षित छ भन्ने आदि विषयको ज्ञान अल्परुपमा समेत नभएको व्यक्ति प्रसारकका रुपमा बसेका खण्डमा त्योभन्दा ठूलो समस्या अरु नहुन सक्छ । आवाज निस्कने हरेक व्यक्ति प्रसारक बन्न सक्दैन, प्रसारकका

लागि उसमा आफ्नो विषयप्रतिको ज्ञान, विषयप्रति थप जिज्ञासा, नभई नहुने कुरा हुन् । तर सामुदायिक रेडियोहरूमा यसतर्फ प्रशस्त कमजोरी देखिएका छन् । प्रसारकमा आफूभन्दा जान्ने सुन्ने कोही छैन भन्ने विचारले प्रधानता पाउनु तथा मैले जे बोलें वा बोल्छु त्यो सबैले नसुनी धरै छैन भन्ने जस्तो मानसिकताले जरो गाड्नु पनि विडम्बनापूर्ण सत्य बनेको छ । यसबाहेक कार्यक्रम निर्माता, रिपोर्टर, प्राविधिकबीच मनोमालिन्य हुनु, समझदारी कायम गर्ने अवस्था सिर्जना हुन नसक्नु, स्टेसनको सञ्चालक समितिमा साँघुरो मनस्थितिका मानिस रहनु र सामुदायिक रेडियो भनेको आफ्नोमात्र स्वार्थसिद्ध गर्ने साधन हो भन्ने मान्यता राख्नु आदिले सामुदायिक रेडियोमा प्रत्यक्ष वा परोक्ष समस्या निस्किरहेका हुन्छन्, जसको निराकरणका लागि समयमै पहल गर्नु आवश्यक छ ।

*च) स्वावलम्बन तथा स्व-अनुशासन:* वर्तमान सञ्चार प्रणालीले कुनै सीमा बन्धन राखेको हुँदैन । सामुदायिक रेडियोले समुदायलाई समुदायस्तरमै खुला बनाइदिएको छ भने सञ्चारका अन्य प्रविधिका कारण सूचना तथा जानकारीले कुनै पनि मुलुक वा समुदायमा अतिक्रमण नै गरिरहेको हुन्छ । यस्ता प्रविधिले श्रोता समुदायलाई आपसमा सकारात्मक रुपमा नै निकट बनाइरहेको हुन्छन् भने नकारात्मक असरका रुपमा यस्ता सूचना तथा जानकारीले कसैको निहित स्वार्थ पूरा गर्न तथा अतिक्रमणको काममा सहयोग पुऱ्याइरहेका हुन सक्छन् । शक्तिशाली सञ्चारमाध्यममा नियन्त्रण हुने समूह वा व्यक्ति विशेषले समाजमा तत्काल नकारात्मक असर फैलाउन सक्छन् । सामुदायिक रेडियो जस्तो सीमित स्रोत र साधन भए तापनि समाजमा राम्रो छवि भएको सञ्चारमाध्यममा गलत व्यक्ति तथा समुदायले वचस्व कायम गरेको खण्डमा त्यसको असर अझ घातक बन्न सक्छ । यस्तो गलत प्रवृत्तिलाई बेलैमा किनारा लगाउन सञ्चारमाध्यम, खासगरी सामुदायिक रेडियो तथा त्यसमा कार्यरत सञ्चारकर्मीले निम्न कार्य गर्नु जरुरी हुन आउँछ,

जसले सामुदायिक रेडियोलाई स्वावलम्बी बन्न तथा सञ्चारकर्मीलाई स्व-अनुशासित बन्न सहयोग पुयाउँछ ।

अ) सञ्चारकर्मीले आफ्नो आचरण, दायित्व, अधिकार तथा कार्यक्षेत्र निर्धारण गर्ने । यसका साथसाथै सामुदायिक रेडियोका लागि पनि यस्तो क्षेत्र निर्धारण गर्ने ।

आ) सामुदायिक रेडियोका विभिन्न विभागहरूमा कामको प्रकृतिअनुरुपको आचारसंहिता लागू गर्ने ।

इ) कुनै सामुदायिक रेडियोले आफ्नो सञ्चार सञ्जाल वा नेटवर्कभित्र अन्य रेडियोलाई समेत समावेश गरेका छन् भने ती रेडियोहरूको भूमिका तथा दायित्वबारे स्पष्ट रुपमा किटान गरिदिने ताकि पछि गएर अनावश्यक झमेला खडा नहोस् ।

नेपालमा केही समययता देखिएको अस्थिरता एवं हिंसाका घटनाहरूका कारण सञ्चारकर्मी तथा सञ्चारमाध्यम त्यसमा पनि सामुदायिक रेडियोहरूको भूमिका तथा दायित्व अझ बढेर गएको छ । यस्तो अवस्थामा व्यावसायिक, आचरणगत तथा नैतिक विषयहरूसँग सम्बन्धित कुरामा सञ्चारकर्मीले सजग रहन आवश्यक हुन्छ । यसबाहेक प्रसार गरिने सूचना तथा समाचारको सत्यता, समाचारको उद्देश्य सामुदायिक रेडियोको दायित्व, समुदायको राष्ट्रिय तथा अन्तर्राष्ट्रिय भावना र प्रतिनिधित्व आदि बारेमा सञ्चारकर्मी सचेत रहनै पर्दछ ।

यी विषयहरूबारे नीति निर्धारण गर्दा एकातिर सामुदायिक रेडियो यसका सञ्चारकर्मीहरूको अधिकार तथा सुविधा वा अनुकूलता निर्धारण गर्न आवश्यक छ भने अर्कोतिर उनीहरूले आफ्नो अधिकार तथा दायित्वबारे आफैं सचेत हुनुपर्दछ । सञ्चारमाध्यमको स्वतन्त्रता अथवा संविधान प्रदत्त वाक स्वतन्त्रताको अर्थ गलत सूचनाको प्रवाह, कुनै दल विशेषको वा वर्ग विशेषको वकालत गर्नु, सूचनालाई बंग्याएर प्रसार गर्नुबाट जोगिन अथवा राष्ट्रिय संवेदनशीलताका बारेमा सञ्चारकर्मी स्पष्ट रहनुपर्दछ । सामुदायिक रेडियोहरूमा समुदायको नियन्त्रणको उद्देश्य

भनेको विद्युतीय सञ्चारमाध्यममा रहेको सरकारी नियन्त्रणको विकल्पमात्रै हो । समाजप्रतिको उत्तरदायित्व भने उत्तिकै हुनुपर्दछ । सामुदायिक रेडियोका सञ्चारकर्मीले यो दायित्वलाई आत्मसात गरेकै हुनुपर्दछ । यसबाहेक सामुदायिक रेडियोमाथिको सामुदायिक वा समितिगत नियन्त्रण पनि उचित किसिमको साथै अग्रगामी किसिमको हुनुपर्दछ । न कि सञ्चारकर्मी र समाजले नै बिचलित हुनुपर्ने किसिमको । यस्तो समस्या गैरसरकारी संस्थाले नियन्त्रण गरेका सामुदायिक रेडियोमा बढी टड्कारो रुपमा देखिएको छ ।

विकासोन्मुख मुलुकहरूमा सहभागिता भन्ने शब्द जतिखेर पनि र जुनसुकै अवस्थामा पनि सुनिने र अघि सारिने शब्द हो । विकास निर्माणसँग सम्बन्धित योजना निर्माणको क्रममा सहभागिता भन्ने शब्द परेको छैन भने दाता समुदायहरू पनि त्यो योजना नै अपुरो भएको मान्यता राख्ने गर्दछन् । समुदायसँग प्रत्यक्ष सरोकार रहेको योजनामा समुदायको नै सहभागिता भएन भने त्यस्तो योजना सफल हुने पनि कसरी ? यो स्थिति सामुदायिक रेडियोहरूमा बढी लागू हुन्छ । समुदायको सर्वतोमुखी हित र उन्नतिका लागि समर्पित हुने सामुदायिक रेडियोमा समुदायको नै सहभागिता नहुने हो भने यसको सफलतामा खडेरी पर्न सक्दछ । विकासका लागि सहभागिता महत्त्वपूर्ण शर्त हो भनेर नारा दिन सजिलो छ, तर विकासमा सहभागिता जुटाउन निकै मेहनत गर्नुपर्दछ । किनकि यसमा जनसंख्याको सबैभन्दा ठूलो हिस्साको रुपमा रहेको गरिब जनसंख्यालाई परिचालित गर्न, तिनलाई सक्षम बनाउन सक्नुपर्दछ । जुन आफैंमा एउटा चुनौती हो ।

नेपालमा एकपछि अर्को गरी सामुदायिक तथा व्यापारिक सहयोगमा रेडियोहरू खुले । जुन विकास प्रक्रियाका लागि अपरिहार्य त थियो र छ पनि । तर ती रेडियोहरूले श्रोता सहभागिता तथा जनसहभागिता जुटाउने उपायतर्फ ध्यान केन्द्रित गर्न नसकेको कारण प्रायः सबै रेडियोहरूको अवस्था सक्षम भन्न लायकको छैन । प्रायः सबै रेडियोहरू सञ्चार आवश्यक मात्रामा क्षेत्रका फौबनजारहरूका प्रभावमा रहेर बोल्न नसक्ने बनेका छन् भने सञ्चार कतिपय यिनै फौबनजारहरूका कारण रेडियो स्टेसन एकआपसमा अस्वस्थ प्रतिस्पर्धा गरी समय र ऊर्जा खेर फालिरहेका छन् । श्रोता सहभागिताका विभिन्न व्याख्या हुन सक्दछन् । सामुदायिक रेडियोमा स्थानीय स्तरमा अथवा गैरस्थानीय स्तरमा श्रोताको सहभागिता रहन सक्दछ । स्थानीय स्तरमा रहने श्रोताका पनि विभिन्न रुप हुन सक्छन् जो आर्थिक, सामाजिक, सांस्कृतिक आदि पृष्ठभूमिका कारण फरक-फरक प्रकृतिका हुन्छन् । यी सबैलाई समेट्न सक्ने अवस्थामा आइपुग्न सामुदायिक रेडियोले आफ्नो दृष्टिकोण, सोचाइ तथा

प्राथमिकतालाई स्पष्ट रुपमा बुझ्न जरुरी छ । अन्यथा यस्ता सामुदायिक रेडियोहरू समाजको विकासको सट्टा विकृतिका पृष्ठपोषक बन्न पुग्दछन् । सामुदायिक रेडियोको नियन्त्रण, निर्णय गर्ने अधिकार आदि "मालिक", प्रशासक अथवा समाजका हुने खाने वर्गको हातमा छ । भने त्यस्तोमा जनसहभागिता कृत्रिम स्वभावको हुन्छ । यसैगरी सर्वसाधारणलाई सुनाउनका लागि अथवा तिनका लागि कस्ता कार्यक्रम बन्छन् भन्ने जनाउँ दिनका लागि मात्रै गराइने सहभागितालाई सहभागिताको कोटीमा राख्नै मिल्दैन । सही अर्थमा रेडियामो श्रोता सहभागिता जुटाउनका लागि उनीहरूको आवश्यकताबारे उनीहरूकै विचार बुझेर उनीहरूकै संलग्नतमा कार्यक्रम बनाउने र त्यसको प्रभावबारे पहिलो मूल्याङ्कन उनीहरूले नै गर्ने वातावरण सिर्जना हुनु आवश्यक छ । ताकि श्रोताहरूले रेडियोलाई आफ्नो भन्न सक्ने अवस्था सिर्जना हुन सकोस् ।

***श्रोताका प्रकारः-*** रेडियोले जब सहभागिताका कुरा गर्छ तब सबैभन्दा अग्रणी स्थानमा आउने श्रोता कस्तो हुन्छ भन्ने स्पष्ट हुन जरुरी हुन्छ । रेडियो सुन्ने जति सबै श्रोता भन्न सकिन्छ । तर रेडियो सुनेर प्रतिक्रिया दिने श्रोताको प्रतिक्रिया हेर्दा त्यो श्रोता कुन प्रकृतिको छ भनेर जान्न सकिन्छ । रेडियो सुन्दासुन्दै कतिपय श्रोतालाई दिक्क लागिसकेको हुन्छ । ऊ आफ्नो स्वाद परिवर्तन गर्न चाहन्छ । कहिले सूचनामूलक कार्यक्रमको सट्टा सांगीतिक कार्यक्रम सुन्न चाहन्छ भने कहिले सांगीतिक कार्यक्रमको सट्टा सूचनामूलक कार्यक्रम प्रसारण हुने रेडियो स्टेसन ट्यून गर्न थाल्छ । विकल्प रहेसम्म श्रोताले आफ्नो मनलाई परिवर्तन गर्ने गर्दछ । त्यो स्वाभाविक पनि हो । पाँच-छ वर्षअघिसम्म सरकारी रेडियो रेडियो नेपालको विकल्पको रुपमा नेपाली श्रोता कुन देशको रेडियो स्टेसनबाट नेपाली कार्यक्रम प्रसार हुन्छ भनेर रेडियोको व्यान्ड घुमाउनमा व्यस्त हुन्थे । फलस्वरुप विभिन्न रेडियो स्टेसनले नेपाली कार्यक्रममार्फत आफ्नो मुलुकका स्वार्थ खुलारुपमा नेपाली श्रोतामाझ पस्किदिन्थे र अझै पस्किरहेकै छन् । नेपाली श्रोताका लागि सरकारी रेडियोले सधैं अलापिरहने

एकै किसिमको रागभन्दा तिनै रेडियोका स्वार्थप्रेरित प्रसारण असल लाग्ने गर्थे । तर अब परिस्थिति भिन्न भइसकेको छ । तैपनि नेपालमा इजाजत पाएका रेडियोका संख्या तीन दर्जन पुग्न लागिसकेको भए पनि त्यसलाई आवश्यक पर्ने जनशक्ति, उपकरण व्यावसायिक ज्ञान आदिको कमीले गर्दा स्थानीय स्तरमा खुलेका वा खुल्ने रेडियोले श्रोताको ध्यान आफूमा केन्द्रित गर्न मुश्किल पर्ने सम्भावना छ । फलस्वरुप खुलेका रेडियो बन्द गर्नुपर्ने अवस्था पऱ्यो भने आश्चर्य मान्नुपर्ने छैन । यस्तो स्थिति आउन नदिन रेडियो प्रसारकहरूले आफ्ना श्रोताको रुचि र आवश्यकता पहिचान गर्नुपर्दछ । सामान्यतया श्रोता दुई प्रकारका हुन्छन् भन्ने मानयता पाइन्छ ।

- ***सक्रिय श्रोता***
- ***सुषुप्त श्रोता***

***सक्रिय श्रोता***:- यस्ता श्रोता रेडियोबाट प्रसार हुने प्राय:जसो कार्यक्रममा रुचि लिने तथा रेडियोका कार्यक्रमहरूका बारेमा आफ्नो धारणा भन्न पछि नपर्ने र वर्तमान नेपालको अवस्थामा सम्पूर्ण रुपमा कुनै एक रेडियो स्टेसन छनौट गरी त्यसलाई आफ्नो रुचिअनुसारको बनाउन उद्यत रहने हुन्छ । यो श्रोता वर्गमा समाजका मध्यम तथा माथिल्लो वर्गका मानिस पर्दछन् । मध्यम वर्गका मानिस आफ्ना समस्याहरू रेडियोमार्फत सार्वजनिक होऊन् र ती माथिल्लो वर्ग अथवा नीति निर्माण तहमा पुगुन् भन्ने अभिलाषा राख्छन् । त्यसैअनुरुप रेडियोलाई परिचालन गर्न अति सक्रिय हुन्छन् । अर्कोतर्फ नीति निर्माण तहमा बस्ने समुदाय आफ्ना क्रियाकलाप तथा कमी-कमजोरीको मूल्यांकन गर्ने समुदायको प्रतिक्रिया सुन्न तथा प्रतिक्रियाहरू पचाउन नसक्ने भएका खण्डमा रेडियो स्टेसनलाई अनावश्क रुपमा आक्षेप लगाउन र झन्झट निम्त्याइदिनसमेत रेडियोका नियमित श्रोता बन्न पुगिरहेका हुन्छन् । यस्ता श्रोता प्रसारकका लागि अति नै मूल्यवान सम्पत्ति हुन्छन् । किनकि यिनले प्रसारकलाई सधैं ठीक बाटोमा डोऱ्याउन वा सतर्क भएर अघि बढ्न मद्दत पुऱ्याउँछन् । यस्ता श्रोताले रेडियो स्टेसनसँग जानेर वा नजानेरै पनि सहानुभूति तथा

विश्‍वास सँगालेको हुन्छ । परेको बेलामा यस्तो श्रोता ढाल बनेर रेडियो स्टेसनका लागि खडा हुन्छ । किनकि आजका नीति–निर्माता भोलि पदबाट हटेपछि पनि त्यही रेडियोका श्रोता बन्न पुग्छन् । उनीहरूका लागि आवश्यक खुराक नै त्यही रेडियोले प्रदान गर्ने गर्दछ । यस्तो श्रोताले स्टेसनप्रतिको धारणा त्यसबेला परिवर्तन गर्दछ, जब स्टेसनले उसको आशाविपरीतका कार्यक्रमहरू प्रसार गर्दछ ।

***सुषुप्त श्रोताः-*** रेडियो सधैं खुला राख्ने, कहिलेकाहीं त्यसले भनेका कुरा सुनेजस्तो पनि गर्ने तर व्यवहारमा कहिल्यै नउतार्ने र रेडियोलाई एकान्तको साथीका रुपमा मात्र लिने व्यक्तिहरू पनि पाइन्छन् । तिनलाई सुषुप्त अवस्थामा रहेका वा सुषुप्त श्रोता भनिन्छ । यस्ता श्रोता जहाँ आवाज आउँछ त्यहाँ व्यान्ड घुमाएर छोडिदिने अथवा जता गीत बजेको हुन्छ त्यहीं व्यान्ड अडाएर छोड्ने गर्दछन् । यी श्रोताले न त कहिल्यै रेडियोबाट प्रसार हुने कार्यक्रमप्रति चाख दिन्छन्, न सहभागी हुन्छन्, न त प्रतिक्रिया नै दिन्छन् । यी फगत श्रोतामात्रै हुन्, यी कहिल्यै सहभागी बन्दैनन् । यी श्रोताको संख्या नै हाम्रो समाजमा बढी हुने गरेको छ । यस्ता सुषुप्त श्रोतालाई जगाएर सक्रिय श्रोतामा रुपान्तरण गर्नु प्रसारकको दायित्व हो । तर प्रसारक नै आफ्नो दायित्वलाई बिर्सेर जागिरेको व्यवहार दर्शाउँछ, स्टेसनप्रति र आफ्ना श्रोताप्रतिको जिम्मेवारी महसुस गर्दैन भने यस्ता प्रसारक रेडियोका लागि दुर्भाग्य हुन् । श्रोताहरू जति बढी हुन्छन् स्टेसनको प्रतिष्ठा त्यति नै व्यापक बलियो हुन्छ भन्ने कुरामा रेडियो स्टेसनको ध्यान केन्द्रित हुनु जरुरी छ ।

***श्रोता सहभागिताको महत्त्वः*** समाजका हरेक वर्गका व्यक्तिहरूमा सुन्ने संस्कृति विकसित गर्नका लागि सामुदायिक रेडियोले निकै मेहनत गर्नुपर्ने अवस्था छ । यस अवस्था सिर्जना गर्नका लागि सञ्चारको यस्तो प्रक्रियाको विकास गर्नुपर्दछ जसमा श्रोता आफैं जागरुक भएर लागोस् । श्रोताले आन्तरिक तथा बाह्य स्रोत परिचालन गर्न सकेमा मात्र रेडियो

स्टेसन सञ्चालन भइरहन सक्दछ भन्ने कुरा बुझ्न जरुरी छ । सामुदायिक रेडियोलाई बाह्य स्रोत मान्ने हो भने श्रोता आन्तरिक स्रोत हुन् । यी दुवैमा तादात्म्य मिलाउन सकिएको खण्डमा मात्र रेडियोको सफलता निश्चित हुन सक्दछ । श्रोता सहभागिताले सञ्चारका तत्त्वहरूलाई अथवा सञ्चार गर्न खोजिएको विषयलाई बुझाइमा परिवर्तन गर्न सक्दछ । श्रोताले रेडियोबाट प्रसारित सामग्रीलाई जबसम्म मनन गर्दैन, कुनै न कुनै रुपमा ग्रहण गर्दैन, तबसम्म त्यो सामग्री प्रसारकको प्रलाप मान्नमात्रै ठहरिन जान्छ । श्रोता र रेडियोबीचको सङ्गम बिन्दुका लागि एउटा सकारात्मक सञ्चार वातावरण हुनु जरुरी छ । ताकि श्रोताले रेडियोप्रति तथा रेडियोले श्रोताप्रति कुनै पूर्वाग्रह राख्ने अवस्था नरहोस् । श्रोता र रेडियोबीचको संगमका लागि निम्न विषयहरूमा ध्यान पुऱ्याउनु जरुरी हुन्छ:

(क) यस्तो किसिमको कार्यक्रम जसले श्रोताको परम्परा, संस्कृति तथा धरोहरहरूको व्याख्या गरोस् । यसबाट समाजको विविध पक्षमा बाँडिएका श्रोताहरूलाई फूलको रुपमा लिई रेडियोले माला बनाउने काम गर्न सक्दछ । तर यस्ता विषयका कार्यक्रम बनाउँदा प्रसारकले विषयबारे गम्भीर अध्ययन भने गरेको हुनै पर्दछ अन्यथा समाजमा सकारात्मकको सट्टा नकारात्मक प्रभाव फैलिन जान्छ ।

(ख) श्रोता सहभागिताका लागि नियमित अन्तर्क्रिया जरुरी हुन्छ । यसबाट श्रोताले आफ्नो समस्या राख्न तथा प्रसारकले ती समस्या समाधानका लागि आवश्यक स्रोत, साधन परिचालन गरी नीति निर्माण तहसम्म जनताका समस्या पुऱ्याउन सहयोग गर्ने अवस्था सिर्जना हुन्छ ।

(ग) छलफल तथा अन्तर्क्रियाबाट श्रोतामा स्व:स्फूर्त रुपमा सहभागिताका लागि ऊर्जा भरिन्छ । यसबाट उनीहरूमा रेडियोप्रति झुकाव र समानताको धारणा विकास हुन्छ । कडिकडाउ नियम कानुन तथा नीतिहरूको तर्जुमा गरी रेडियो स्टेसन सञ्चालन गर्न खोज्नुले

श्रोतामा नैराश्यता, शंका तथ निहीत स्वार्थको प्रवर्द्धन हुन जान्छ ।

(घ) आपसी समझदारीले नै मानव सञ्चारले कार्य गर्दछ । त्यसैले यो तटस्थ हुन सक्दैन । कुनै प्रसारकको पृष्ठभूमिले श्रोताको संवेदनशीलतामा ठाडो चोट पुऱ्याउन सक्दछ । प्रसारकले श्रोताप्रतिको दायित्वलाई लत्याएर "मलाई के वास्ता" भन्ने जस्तो व्यवहार दर्शाउन सुरु गऱ्यो भने यसले आपसी विश्वासको धरातललाई तहस-नहस पार्दछ ।

(ङ) माथि उल्लिखित विषयहरूमा ध्यान पुऱ्याउँदा प्रसारक र श्रोताबीचको दूरी घटबढ हुनुको सट्टा आपसी तालमेल मिल्न जाने कुरामा दुईमत हुन सक्दैन ।

सबै एफएम स्टेसनहरू सामुदायिक रेडियो हुनु जरुरी छैन । तर सबै सामुदायिक रेडियो एफ.एम. व्यान्डमा नै प्रसार हुन्छन् । नेपालको सन्दर्भमा दक्षिण एसियाको पहिलो स्वतन्त्र सामुदायिक रेडियोको रुपमा रेडियो सगरमाथाले २०५४ साल जेठ ९ गते कार्यक्रम प्रसारण सुरु गरेपछि प्रसारण क्षेत्रमा नौलो आयाम आएको छ । रेडियो सगरमाथाले आफ्नो प्रसारण एफ.एम. १०२.४ मेगाहर्जमा सुरु गरेकाले त्यसपछि एफ.एम. व्यान्डमा प्रसारण गर्न सुरु गर्ने सम्पूर्ण रेडियो सामुदायिक नै हुन् कि भन्ने भ्रम सिर्जना हुन गयो । तर एफ.एम. व्यान्डमा प्रसार हुने सबै रेडियो सामुदायिक होइनन् । स्थापनाको अवधारणा तथा तिनको उद्देश्यअनुरुप एफ.एम. व्यान्डमा प्रसारण हुने रेडियोलाई सामुदायिक र व्यापारिक गरी दुई भागमा बाँड्न सकिन्छ । सामुदायिक रेडियोहरू नाफामुखी हुँदैनन् भने व्यापारिक रेडियोहरू नाफामूलक हुन्छन् । व्यापारिक रेडियोको मूल उद्देश्य पैसा कमाउने हुन्छ भने सामुदायिक रेडियो समाजको उत्थान र विकासका लागि लागिरहेका हुन्छन् ।

## नेपालका केही एफ.एम. स्टेसनहरूको परिचय छोटकरी रुपमा यसप्रकार छन्

**रेडियो सगरमाथाः**– १०२.४ मेगाहर्ज ।

**प्रसारण केन्द्रः**- बखुण्डोल, ललितपुर ।

**इजाजत पाएको मितिः**- २०५४ साल जेठ ६ गते ।

**प्रसारण सुरु भएको मितिः**- वि.सं. २०५४ साल जेठ ९ गते

**कार्यरत जनशक्तिः**- पूर्णकालिक, आंशिक तथा स्वयंसेवक गरी ६० जना

**सञ्चालकः**- नेपाल वातावरण पत्रकार समूह ।

**स्थापना सहयोगः**- संयुक्त राष्ट्रसंघीय शैक्षिक, वैज्ञानिक तथा सांस्कृतिक संगठन(युनेस्को) को ६० हजार अमेरिकी डलरको सहयोग प्राप्त ।

**स्थितिः**- दक्षिण एसिया क्षेत्रकै पहिलो स्वतन्त्र सामुदायिक रेडियो ।

**प्रसारण क्षमताः**- सुरुमा १०० वाट र हाल ५०० वाट ।

**प्रसारण समय**:- आरम्भमा २ घण्टा दैनिकबाट सुरु भई हाल दैनिक १५ घण्टा (शनिबार १८ घण्टा)।

**प्रसारणको पहुँच**:- काठमाडौं उपत्यका र वरिपरिका छिमेकी जिल्लाहरू।

**श्रोताको संख्या**:- प्रसारण पहुँच र अनौपचारिक अध्ययनअनुसार अनुमानित १८ लाख जनसंख्या।

**स्थापनाको उद्देश्य**:-

(क) समाजका विभिन्न समुदाय विशेषत: ओझेलमा परेका महिला, बालबालिका, दलित, गरिब र असहाय जनसमुदायका लागि सूचनाको आवश्यकता पूरा गर्दै नेपालका सार्वजनिक वा सामुदायिक रेडियो प्रसारण सेवाको मानक स्थापित गर्ने।

(ख) सामुदायिक र सार्वजनिक क्षेत्रको चासोप्रति समर्पित दक्ष पत्रकारहरूको समूह तयार गर्ने।

(ग) जनसहभागितामूलक, प्रजातान्त्रिक र बहुलवादी समाजको विकासका लागि स्वतन्त्र र जिम्मेवार रेडियो पत्रकारिताको अभिवृद्धिमा योगदान पुऱ्याउने।

(घ) सामुदयिक रेडियोहरूको क्षमता, दक्षता, प्रविधि र सीप अभिवृद्धि गर्न सहयोग गर्नुका साथै स्रोत केन्द्र अथवा नेतृत्वदायी रेडियो स्टेसनका रुपमा रेडियो सगरमाथालाई अघि बढाउने।

(ङ) हाल प्रसारणमा रहेका कार्यक्रमहरू समाचारमूलक, समसामयिक, विज्ञान प्रविधि, शिक्षा, संस्कृति, भाषा साहित्य, सञ्चार, महिला, बालबालिका, अशक्त, स्वास्थ्य, दिगो विकास, वातावरण, उद्योग व्यवसाय, उपभोक्ता, मानव अधिकार, कूटनीति, लोक र आधुनिक संगीत, हास्य तथा मनोरञ्जनात्मक सांस्कृतिक कार्यक्रम। अन्तर्राष्ट्रिय समाचार तथा सञ्चार क्षेत्रसँग तादात्म्य कायम गर्नका लागि बी.बी.सी. नेपाली सेवा तथा दक्षिण एसियासम्बन्धी समाचारमूलक कार्यक्रमको प्रत्यक्ष प्रसारण।

## रेडियो मदनपोखरा १०६.९ मेगाहर्ज:–

पाल्पाको मदनपोखरामा २०५५ सालमा स्थापित रेडियो मदनपोखरा गाउँ विकास समितिद्वारा सञ्चालन गरिएको नेपालको पहिलो सामुदायिक रेडियो हो । यसको पहिलो प्रसारणले पाल्पाका जनसमुदायलाई स्थानीय स्तरमा पनि रेडियो स्थापना हुन सक्दो रहेछ भनेर अचम्ममा पारेको थियो । रेडियो मदनपोखराको छोटकरी परिचय यस प्रकार छ:

k|;f/0f s]Gb|:-मदनपोखरा, पाल्पा
**इजाजत पाएको मिति:–** २०५५ साल पुस १८ गते
**प्रसारण सुरु भएको मिति:** - वि.सं. २०५६ चैत २३ गते
**कार्यरत जनशक्ति:**- १८ जना
**सञ्चालक:**- मदनपोखरा गाउँ विकास समिति, पाल्पा
**सञ्चालक समिति:**- ९ जना सदस्य
**मूल सहयोग:**- संयुक्त राष्ट्रसंघीय शैक्षिक, वैज्ञानिक तथा सांस्कृतिक संगठन(युनेस्को) को २१ हजार डलर
**कार्यान्वयन:**- रेडियो सगरमाथाद्वारा परियोजना कार्यान्वयन परियोजना
**हस्तान्तरण:**- २०५८ साल वैशाख
**प्रसारण क्षमता:**- १०० वाट
**प्रसारण समय:**- ७ घण्टा ३० मिनेट ।
**प्रसारण क्षेत्र:**- पाल्पा, नवलपरासी, अर्घाखाँची, स्याङ्जा, गुल्मी ।

## मेट्रो एफ.एम. १०६.७ मेगाहर्ज

काठमाडौं महानगरपालिकाले महानगर क्षेत्रका बासिन्दाको जीवनस्तर उकास्ने किसिमका कार्यक्रम प्रसार गर्नुका साथै महानगरकाद्वारा सञ्चालित विकास निर्माणका कार्य तथा काठमाडौं महानगरपालिका क्षेत्रका सांस्कृतिक तथा पुरातात्विक स्थलहरूका बारेमा ज्ञान बढाउनुका साथै तिनको संरक्षणतर्फ जनचेतना जगाउने उद्देश्यले २०५४ साल

फागुन महिनामा मेट्रो एफ.एम. १०६.७ मेगाहर्जका लागि सरकारी इजाजत लिएको हो । यसको विस्तृत परिचय यसप्रकार छ:–

**प्रसारण केन्द्र**:– कालिकास्थान, काठमाडौं
**इजाजत पाएको मिति**:- २०५४ फागुन २५ गते ।
**प्रसारण आरम्भ मिति**:- २०५५ असोज १ गते
**कार्यरत जनशक्ति**:- करिब ४५ जना (समय-समयमा थपघट भइरहने)
**सञ्चालक**:- काठमाडौं महानगरपालिका, सूचना तथा सञ्चार विभाग, मेट्रो एफ.एम. शाखा
**प्रसारण क्षमता**:- १०० वाट
**प्रसारण समय**:- ११ घण्टा
**प्रसारण क्षेत्र**:- काठमाडौं उपत्यका

**प्रसारणको उद्देश्य**:- काठमाडौं महानगरपालिकाभित्रको परम्परागत संगीत, कला, संस्कृति र ऐतिहासिक तथा पुरातात्विक महत्त्वका स्थलहरूको संरक्षण र सम्बर्द्धन गर्ने । महानगरपालिकाका गतिविधि र विकास निर्माणबारे महानगरवासीलाई जानकारी दिने ।

**हाल सञ्चालनमा रहेका कार्यक्रमहरू**:- सूचनामूलक, मनोरञ्जनात्मक, शिक्षामूलक, महानगरपालिकाका गतिविधि, साहित्य, संस्कृतिसम्बन्धी कार्यक्रमका साथै तामाङ तथा नेवारी भाषामा समेत कार्यक्रम प्रसार हुने गरे तापनि कार्यक्रम थपघट भइरहने भएकाले यसै हो भन्ने स्थिति नरहेको अवस्था देखिएको छ ।

गाउँ विकास समितिको सञ्चालनमा रहेकाले रेडियो मदनपोखरामा प्रत्येकपटक गाविसको नेतृत्व परिवर्तनले प्रत्यक्ष-परोक्ष असर पार्ने गरेको छ भने असामान्य अवस्थामा गाविसका सम्पूर्ण पदहरू खारेज गरी नयाँ निर्वाचन हुन नसक्ने जस्ता कारणले सञ्चालनमा कठिनाई उत्पन्न हुनु ।

## रेडियो लुम्बिनी ९६.८ मेगाहर्ज

रेडियो लुम्बिनी सहकारी संस्थाको सहयोगमा वा स्वामित्वमा सञ्चालन भएको नेपालको पहिलो सामुदायिक प्रकृतिको रेडियो हो । नेपालको तराई क्षेत्रमा स्थापना भएको यो रेडियोले उपयुक्त अवसर प्राप्त गरेमा देशभित्र मात्र नभई छिमेकी मुलुक भारतको सीमाक्षेत्रका जनसमुदायमा समेत बौद्धिक तथा सामुदायिक चेतना फैलाउन अग्रणीको भूमिका खेल्न सक्ने देखिन्छ । यसको परिचय यसप्रकार रहेको छ:

**प्रसारण केन्द्र**:- मणिग्राम, रुपन्देही ।
**इजाजत प्राप्त गरेको मिति**:- वि.सं. २०५५ पुस २० गते ।
**प्रसारण आरम्भ भएको मिति** :- २०५६ माघ २७ गते ।
**कार्यरत जनशक्ति:-** करिब ३० जना ।
**सञ्चालक** :- लुम्बिनी सूचना तथा सञ्चार सहकारी संस्था लि. ।
**सहयोग**:- संयुक्त राष्ट्रसंघ शैक्षिक, वैज्ञानिक तथा सांस्कृतिक संगठन ( युनेस्को) तथा डेनिस सहयोग नियोग (डानिडा) को सहयोग प्राप्त ।
**प्रसारण क्षमता** :- २०० वाट ।
**प्रसारण समय** :- १४ घण्टा ३० मिनेट ।
**प्रसारण क्षेत्र** :- रुपन्देही, कपिलवस्तु र नवलपरासीको जनसंख्या ।

**प्रसारणको उद्देश्य** :- रुपन्देहीवासीहरूको आत्मसम्मानको खोजी गर्नु, मौलिक परिचय दिलाउनु, रुपन्देहीवासीहरूको बीचमा सहमति कायम गर्दै विकासका लागि । रेडियो लुम्बिनी भारतसँगको सीमा नजिक भएकाले नेपाली समुदायमा भारतीय कला, संस्कृतिको प्रभावलाई कम गराई नेपालीमा नेपालीत्व जगाउने काममा यसले गहन भूमिका खेल्न सक्दछ ।

## रेडियो स्वर्गद्वारी १०२.८ मेगाहर्ज

स्थानीय गरिब तथा पिछडिएका जनसमुदायको हितका लागि चेतनामूलक कार्यक्रमहरू सञ्चालन गरेर सो समुदायलाई विकासको

राष्ट्रिय मूलधारमा ल्याउने गहन उद्देश्य राखेर २०५८ सालमा दाङको घोराहीमा रेडियो स्वर्गद्वारी स्थापना गरिएको हो। प्यूठान जिल्लामा रहेको नेपालकै तथा विश्वविख्यात धार्मिक तथा पर्यटकीय स्थल स्वर्गद्वारीको नाममा स्थापना गरिएको यो रेडियोले दाङ उपत्यकालगायत केही छिमेकी जिल्लामा समेत आफ्नो पहुँच र प्रभाव विस्तार गरेको देखिन्छ। रेडियो स्वर्गद्वारीको छोटकरीमा परिचय यसप्रकार छः-

**प्रसारण केन्द्रः-** दाङ, घोराही।
**प्रसारण इजाजत पाएको मितिः-** २०५८ वैशाख ४ गते
**प्रसारण सुरु भएको मिति** :- २०५८ पुस ९ गते।
**कार्यरत जनशक्ति** :- करिब ३० जना।
**सञ्चालकः-** स्वर्गद्वारी सञ्चार केन्द्र।
**सहयोगः-** नेपाल वातावरण पत्रकार समूह र डेनिस सहयोग नियोग डानिडाको सहयोग।
**प्रसारण क्षमताः-** १०० वाट।
**प्रसारण समय** :- ७ घण्टा ३० मिनेट।
**प्रसारण क्षेत्र** :- दाङ उपत्यकालगायत रोल्पा, सल्यान र बाँके जिल्लाका केही भाग।

**उद्देश्यः-** सामाजिक प्रकृतिका कार्यक्रमहरू सञ्चालन गरेर स्थानीय तथा पिछडिएको समुदाय र वर्गलाई मूलधारमा ल्याउन पहल गरी मध्यपश्चिम नेपालको समग्र पक्षलाई उजागर गरेर राष्ट्रको हितमा योगदान गर्ने। खासगरी दाङका स्थानीय बासिन्दा थारू जाति र अन्य पिछडिएका वर्गको जीवन सहज बनाउन सूचना तथा जानकारी उपलब्ध गराउने।

**प्रसारणमा रहेका कार्यक्रमहरूः–** सूचनामूलक, समसामयिक, साहित्य, थारू भाषा, संगीत, मनोरञ्जनात्मक तथा शिक्षामूलक कार्यक्रमहरू।

## हिमचुली एफ.एम. ९२.२ मेगाहर्ज

विश्वमै नेपालको अति ख्यातिप्राप्त पर्यटन स्थल पोखरा नगरमा रहेका भाषा, संस्कृति तथा रहन-सहनको उत्थान गर्ने उद्देश्यले २०५७ सालमा हिमचुली एफ.एम. को स्थापना गरिएको हो । सामुदायिक प्रकृतिको हिमचुली एफ.एम. बहुउद्देश्यीय सहकारी संस्थाले स्थापना गरेको पहिलो रेडियो हो । हिमचुली एफ.एम. छोटकरी परिचय यसप्रकार छ :-

**प्रसारण केन्द्र**:- पोखरा ।
**इजाजत प्राप्त गरेको मिति**:- २०५७ माघ २० गते ।
**प्रसारण आरम्भ गरेको मिति**:- २०५७ चैत ।
**कार्यरत जनशक्ति** :- करिब ३० जना ।
**सञ्चालक**:- पोखरा एफ.एम. बहुउद्देश्यीय सहकारी संस्था लि.।
**प्रसारण क्षमता** :- ५०० वाट ।
**प्रसारण समय**:- १५ घण्टा (शनिबार १६ घण्टा) ।
**प्रसारण क्षेत्र**:- पोखरा उपत्यका ।

**उद्देश्य** :- पोखरावासीहरूको जीवनस्तर माथि उकास्ने तथा स्थानीय भाषा, कला, संस्कृति, लोकसंगीत तथा साहित्यको उत्थान गर्ने ।

**प्रसारणमा रहेका कार्यक्रम** :- समसामयिक विषयवस्तुका साथै आर्थिक, सामाजिक, सांस्कृतिक, शैक्षिक, वातावरण, स्वास्थ्य, भाषाभाषी, बालबालिका तथा महिलासम्बन्धी कार्यक्रमहरू ।

